जोधपुरमा शिष्यको तर्फबाट पूजनीय गुरुमाताको पूजन गरिँदै

शिविरमा अरविन्द गुरुदेवलाई माल्यार्पण गर्नुहुँदै संयोजकद्वय

भित्तेपात्रो तथा पत्रिका विमोचन गर्नुहुँदै माताजी एवं गुरुदेव

नेपाली शिष्यहरूका साथ होली खेल्दै अरविन्द गुरुदेव

फागु पूर्णिमाको दिन जोधपुरको रेल्वे स्टेशनमा नेपाली टोली

आध्यात्मिक नेतृत्वकर्ताहरूको लागि सम्पन्न प्रशिक्षण

आध्यात्मिक नेतृत्वकर्ताहरूको लागि सम्पन्न प्रशिक्षण

वीरगञ्जको आश्रममा सम्पन्न हवन

● वर्ष १२ ● अङ्क ९ ● वैशाख २०६८ ● पूर्णाङ्क १४१

## सम्पर्क कार्यालयहरु


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बैंसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौं**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौं**, सिमलटार
- **काठमाडौं**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**
निखिल विशेष
मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ। परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो। आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ। यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ। यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन्। यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ। त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन्। त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ। विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुर्‍याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ। यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ। साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती। प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन। प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम। प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन। विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम। गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन। विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन। समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन। तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू। समय समयमा विशेष साधना कार्यक्रमहरू। प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण। समस्या समाधानका लागि परामर्श सेवा। असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था।


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**

सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

ssk.org.np, info@ssk.org.np

**मुद्रण**

**भेराइटी प्रिन्टर्स प्रा.लि.**

कुलेश्वर, काठमाडौं।

**पत्रिकाको कार्यालय**

**बसुन्धरा, काठमाडौं, नेपाल**

**फोन नं:** ०१-४३८९१५४, २१००१५३ URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा...

सर्वप्रथम त नयाँ वर्ष २०६८ को पावन अवसरमा सम्पूर्ण महानुभावहरुलाई सद्‌गुरुदेवको कृपा, आशीर्वाद प्राप्त भई आध्यात्मिक एवं भौतिक उन्नति प्रगति हुँदै जाओस् भन्ने हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं।

समयको चक्रसँगै दिन, महिना गर्दै वर्षहरु बित्ने क्रमको दौरानमा नववर्ष २०६८ लाई स्वागत गर्दैछौं भने २०६७ हामीबाट विदा भएको छ। प्रत्येक वर्षले हाम्रो जीवनमा आ-आफ्नै महत्त्व राख्ने गर्दछ। जीवनको दौरानमा जीवनलाई अगाडि बढाउने क्रममा २०६७ साल कतिको लागि सफलताको, उन्नति प्रगतिको, खुशीको वर्ष भयो होला भने कतिका लागि संघर्षको, विभिन्न उतारचढावको वर्ष रह्यो होला। विगतको वर्ष जसरी गुज्रेको भए पनि यस वर्षलाई राम्रो बनाऔं, उन्नति प्रगतिको वर्ष बनाऔं यसको लागि सद्‌गुरुदेवहरुलाई खुशी बनाऔं, उहाँहरुको कृपा, आशीर्वादलाई प्राप्त गरी जीवनलाई धन्य बनाउनेतिर लागौं।

सिद्धाश्रम शक्ति केन्द्र आफ्नो स्थापनाकालको १२ वर्ष पूरा गरी १३ औं वर्षमा पदार्पण गर्दैछ। सगौरव एउटा इतिहास बनाउन सफल यस केन्द्रका लागि २०६७ साल एक ऐतिहासिक वर्ष रह्यो। कारण आफ्ना परम आदरणीय पूजनीय गुरुमातालाई सारा शिष्यहरुको तर्फबाट, सारा नेपालीहरुको तर्फबाट राष्ट्रिय अभिनन्दन गरी एक इतिहास लेख्न सफल भयो। पूजनीय गुरुमातालाई भव्य एवं दिव्य कार्यक्रमको आयोजना गरेर देश, विदेशका हजारौं व्यक्तिहरुको जमघटमा राष्ट्रिय अभिनन्दन गर्नु, अन्तर्राष्ट्रिय साधना शिविरको आयोजना गर्नु, साथै सर्वथा पहिलोपटक पूजनीय गुरुमाताको मुखारविन्दबाट हजारौंले गुरुमन्त्र प्राप्त गर्ने अवसरको आयोजना गरी एउटा नयाँ इतिहास बनाउन सफल भयो। वर्षौंदेखि प्रत्यक्ष सम्पर्क नभएको गुरुधामसँगको सम्बन्धले एकाएक नयाँ मोड लिई आत्मीयता गाँस्न सफल भयो। यस केन्द्रले गुरुसेवामा, गुरु योजनामा हालसम्म गरेका कार्यहरुको प्रशंसा भयो, आफ्नो छुट्टै पहिचान दिलाउन सफल भयो, सर्वत्र सम्पूर्ण भारतवर्षमा चर्चाको शिखरमा पुग्न सफल भयो, भारतका शिविरहरुमा समेत चर्चाको विषय बन्न पुग्यो। गुरुधामबाट प्रकाशित हुने पत्रिकामा पनि उच्चस्थान प्राप्त गर्न सफल रह्यो। यसरी राष्ट्रिय, अन्तर्राष्ट्रियरुपमा २०६७ सालले सिद्धाश्रम शक्ति केन्द्रलाई राम्ररी उभ्याउन सफल भयो।

त्यस्तै, पहिलोपल्ट श्री श्री महायोगी गुरु गोरखनाथको प्रथम प्राकट्यस्थल गोरखास्थित गोरख गुफाको प्रांगणमा सामुहिकरुपमा अखण्ड सवाकरोड मन्त्रजप महाअनुष्ठान सफलतापूर्वक सम्पन्न गर्न सफल भयो। यसरी समष्टिगतरुपमा विभिन्न दिव्यतम् कार्यक्रमहरु सफलतापूर्वक सम्पन्न गर्दै २०६७ साल यस केन्द्रका लागि उपलब्धिपूर्ण वर्ष रह्यो।

२०६८ को आगमनसँगै यस केन्द्र आफ्ना परम आराध्यदेव सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज यस धरामा अवतरित हुनुभएको २१ अप्रिल (वैशाख ८ गते) लाई भव्य एवं दिव्य कार्यक्रमका साथ मनाउँदैछ भने परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ यस धरामा प्रथमपटक प्रकट हुनुभएको प्रकट दिवस वैशाखी पूर्णिमा यसपटक जेठ ३ गते परेको छ। यस दिनदेखि आठौं रोट महोत्सवको आयोजना गर्दै भव्य एवं दिव्य कार्यक्रमका साथ मनाउँदैछ। यसपालि अनुकूल भएसम्म परम वन्दनीय गुरुमाता एवं अरविन्द गुरुदेवको समुपस्थिति हुने भएकोले कार्यक्रमको रौनकताले नयाँ मोड लिने आशा लिएका छौं। त्यसैले निकट भविष्यमा हुन गइरहेका यस्ता दिव्य दिव्य कार्यक्रममा यहाँहरुको सक्रिय सहभागिताको लागि हार्दिक अनुरोध गर्दछौं।

यसपालिको अंकलाई 'निखिल विशेष'को रुपमा निकाल्ने कोशिस गरेका छौं। परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको दिव्यता, उच्चता, महानता शब्द चर्चाभन्दा धेरै परको विषय हो। साधनात्मक उचाइबाट मात्रै उहाँको बारेमा केही बुझ्न सक्नेछौं। त्यसैले यस अंकमा जे जति विषयहरु समेट्न सकियो यसैलाई नै पूर्ण नठान्नुहोला। साथै, यस अंकमा भएका कमी, कमजोरी र न्यूनताका लागि परमपूज्य सद्‌गुरुदेवहरुसँग र यहाँहरुसँग पनि क्षमायाचना गर्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा राख्दछौं। अस्तु।

**परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**

**परमपूज्य सद्गुरूदेव श्री श्री महायोगी गुरू गोरखनाथ**

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौं–**

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रहृमाण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३५ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो। वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो। संन्यास जीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम्।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ। योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो। यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ। गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो। नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ।

# मंगल सुप्रभातम्

प्रातर्नमामि भगवन्त मनन्तवीर्यं, सौभाग्यदं श्रुतिमयं भक्तार्थ चिन्त्यं ।
पापौघ शत्रुभय रोगहरं परं च, नमामि सततं निखिलेश्वरं विभुम् ॥१॥

अनन्त सौर्यसम्पन्न, साधक र शिष्यहरूलाई सौभाग्य प्रदान गर्नुहुने, सकल शास्त्रमय एवं रोगहरूलाई दूर गर्नुहुने भगवत, पूज्यपाद गुरुदेव निखिलेश्वरको श्रीचरणमा यस प्रातःकालमा नमन अर्पित छ ।

प्रातः स्मरामि सिद्धाश्रम प्राण मूलं, सत्यव्रतं प्रियकरं कलिकल्मषघ्नं ।
सर्वार्थ सिद्धि सदनं प्रथित प्रभावं, नमामि नित्यं निखिलेश्वरं गुरुम् ॥२॥

जो सिद्धाश्रमका प्राणस्वरूप हुनुहुन्छ, कलिकालका समस्त कल्मषहरूलाई दूर गर्नुहुने, सम्पूर्ण मनोरथहरूलाई पूर्ण गर्नुहुने गुरुदेव निखिलेश्वरको श्रीचरणमा पुनः पुनः नमन स्वीकार गर्नुहोस् ।

प्रातर्भजामि तं मंगल सर्वमंगलं, सृष्टिस्थितौ परम कारणमूल रूपं ।
संसार बन्धन विमोचन हेतु भूतं श्रीमद् गुरुं च निखिलेश्वर देव देवं ॥३॥

मंगलका साक्षात् विग्रह संसारबन्धनलाई दूर गर्नुहुने, संसारका पालनकर्ता, देवाधिदेव, गुरुदेव मेरो प्रातःकालीन शत्‌शत् नमन स्वीकार गर्नुहोस् ।

प्रातर्नमामि तन्त्रेश्वर भावभाजनं, आनन्द कन्द निखिलं परिपूर्णसत्वं ।
मुक्तेश्वरं परमलक्ष्यमयं परेशं, आवाहनं मद्गुरुं परिपूर्ण सिन्धुम् ॥४॥

आनन्दस्वरूप, तन्त्रेश्वर, साधक एवं शिष्यहरूलाई पूर्णता प्रदान गर्नुहुने, परममुक्तस्वरूप गुरुदेव निखिलेश्वरलाई म प्रातःकाल आवाहन गर्दछु ।

प्रातर्भजामि ब्रह्माण्ड स्वरुप निर्मलं, वैश्वानरं प्रणत पालन तत्परं तं ।
त्रैलोक्य मोहन परं पुरुष प्रधानं, नमामि शुद्धं निखिलेश्वरं मनुम् ॥५॥

वैश्वानरस्वरूप समस्त ब्रह्माण्डलाई आफूभित्र स्थापित गरेर सम्पूर्ण विश्वलाई सम्मोहित गर्नुहुने पुरुषप्रधान परम पावन गुरुदेव निखिलेश्वरको श्रीचरणमा यस प्रातःकालमा नमन गर्दछु, स्वीकार गर्नुहोस् ।

दुर्ल भं मानुषं जन्म दुर्लभं गुरु चिन्तनं । दुर्लभं गुरु सान्निध्यं सुलभं आत्म दर्शनम् ॥६॥

मानवजीवन दुर्लभ छ, गुरु चिन्तन पनि दुर्लभ छ, गुरुको सान्निध्यता मिल्नु पनि परम सौभाग्य हो, तदन्तर आत्मस्वरूपको प्राप्ति सुलभ हुन्छ ।

अतो सर्व प्रयत्नेन गुरुमाराधयेत् बुधः । यस्य कृपा कटाक्षेण अहोभावो महोत्सवः ॥७॥

यसैले प्रत्येक स्थितिमा गुरुलाई प्रसन्न गर्ने प्रयास गर्नुपर्दछ, जसको कृपा मात्रले यस जीवन अहोभावयुक्त महोत्सव बन्न जान्छ ।

# सद्गुरु निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

विश्वमा हजारौं गृहस्थ योगी होलान्, परमहंसको अवस्थामा विचरण गर्दै गरेका ज्ञात, अज्ञात योगीहरू होलान्, तर हजुरजस्ता त कोही पनि छैनन् ।

गठिलो कसिएको बलिष्ठ शुभ्रवर्णीय शरीर, ६ फुटभन्दा अग्लो उचाइ, मस्तिष्कमा उठेका त्रिपुण्ड रेखाहरूले युक्त देदीप्यमान तेजस्वी अनुहार, हृदयभेदन गर्ने नयन, सिंहसमान् निडर, निर्भिक गतिले सम्पूर्ण भारतवर्ष एवं पश्चिमी देशमा भारतीय संस्कृतिको ज्योति प्रज्ज्वलित गर्नुहुने व्यक्तित्व निखिलेश्वरानन्दज्यू, जसको गृहस्थ नाम नारायणदत्त श्रीमाली... को छवि आज पनि सबैको हृदयको धुकधुकीमा समाएको छ । यस्ता निखिलेश्वरानन्दज्यू, जो कुनै पनि चुनौतीको दृढतापूर्वक सामना गर्न समर्थ हुनुहुन्छ, जो पृथ्वीतलमा डा. नारायणदत्त श्रीमालीको रूपमा आउनुभयो र जसले 'पराजय' शब्दलाई आफ्नो जीवनबाट निकालेर फ्याँक्नुभएको थियो, जसले आफ्ना गृहस्थ शिष्यहरूलाई आफ्ना परिवारलाई भन्दा पनि धेरै अपनत्व दिनुभयो, शिष्यहरूलाई आफ्नो रगतको थोपाथोपा अर्पण गर्न तत्पर रहनुभयो, आफ्नो तपस्यांश एवं साधनाको शक्तिबाट शिष्यहरूलाई साधनात्मक उचाइमा पुऱ्याउन निरन्तर प्रयत्नशील रहनुभयो । आफूभित्र सम्पूर्ण ब्रह्माण्डका अगम्य अगोचर साधनाहरूलाई समेटेर बस्नुभएका सद्गुरुदेव निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

साधारण घरमा जन्म लिएर पनि भारतवर्षका लुप्त हुँदै गरेका प्राचीन संस्कृति, ज्ञानविज्ञान, मंत्र, योग, दर्शन र अध्यात्म आदिलाई आफ्नो व्यक्तित्वको बलमा पुनर्जीवित गरेर देखाउनुभयो, एउटा सानो व्यक्ति पनि आफ्नो क्षमताको बलमा साधनाजयी बन्न सक्छ, जसबाट ऊ विश्वका सम्पूर्ण साधकहरूको हृदयमा छाउन सक्छ भनेर देखाउनुभयो । जसले दुर्लभ जडीबुटीहरूको शोध

गरेर नयाँ आयाम दिनुभयो, पदार्थविज्ञानलाई नयाँ गति दिनुभयो एवं मृतप्राय: आयुर्वेदलाई जसरी संजीवनी दिएर जीवन्त गर्नुभयो, त्यस अपराजय व्यक्तित्व सद्‌गुरुदेव निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

हजुरले भारतीय जनमानसमा जसरी तीव्रताका साथ ज्योतिष सम्मेलनको अध्यक्षता गर्नुहुँदै जनमानसलाई ज्योतिषसम्बन्धी गूढ रहस्यहरूसित परिचित गराउनुभयो, भारतीय समाजले ज्योतिषसित सम्बन्धित कुनै पनि तथ्यलाई केवल हजुरजस्ता व्यक्तित्वको मुखारविन्दबाट निस्कनासाथ प्रामाणिक मानेर ज्यूँकात्यूँ हृदयंगम गरे । यो हजुरको नै योगदान हो कि आज ज्योतिषविद्या पुन: भारतीय समाजमा मात्र नभई पूरै विश्वमा गर्वका साथ गौरवान्वित भएको छ । यतिमात्रै होइन, हजुरले ज्योतिषसम्बन्धी ग्रन्थहरू रचेर यस विद्याको जसरी जन जनमा प्रचार गर्नुभयो, यसबाट सामान्य मानिस पनि ज्योतिषविद्यातर्फ पुन: लालायित भए । यो सबैका लागि आश्चर्य हो । हजुरलाई कैयौँपटक पुरस्कार प्रदान गरेर हजुरप्रतिको आफ्नो हृदयभित्रको मौनप्रेम प्रकट गरिएको छ । मानिसलाई ज्योतिषप्रेमी बनाउनुहुने, मृतप्राय: ज्योतिषलाई जीवन्तता दिनुहुने आश्चर्यजनक अपराजय सद्‌गुरुदेव निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

प्राचीन समयमा प्राचीन साधनाहरूलाई जब काल्पनिक सम्झन थालेका थिए, देवताहरूप्रति अविश्वास गर्न थालेका थिए, समाजले तंत्रमंत्रप्रति घृणा गर्न लागेका थिए एवं भारतमा पूर्वकालीन ऋषिहरूको वाणीको उपहास हुन लागेको बेला, समाज पाश्चात्य संस्कृतिको रङमा रंगीन थालेको बेला हजुरले संन्यासजीवनमा गर्नुभएको साधनासम्बन्धी मंत्र-तंत्र-यंत्रबाट समाजलाई हाँक दिँदै यसबारेमा अवगत गराउनुभयो र तिनको प्रामाणिकता सिद्ध गर्नुभयो । जसरी हजुरले साधना एवं सिद्धिहरूको प्रामाणिकताबाट पाश्चात्य संस्कृतिलाई गतिलो जवाफ दिनुभयो । यस विश्वका लागि त्यो आश्चर्य हो । यो हजुरकै प्रभाव हो कि आज विश्व पुन: आर्यावर्ततिर नै आशान्वित भएका देखिन्छन् । अहिले पुन: सबै यी साधनाहरूतर्फ लालायित भएर प्रयत्नशील भइरहेका छन् । हजुरले जसरी 'मंत्र-तंत्र-यंत्र विज्ञान' मासिक पत्रिका एवं आफ्नो जीवनकालमा रचित ग्रन्थहरूको माध्यमबाट लुप्त भएका साधनाहरू, सिद्धिहरू र मंत्रहरूबाट जसरी समाजलाई जागृत गर्नुभयो, हजुरको अप्रतिम व्यक्तित्वको प्रभावबाट समाज अनि देश पुन: साधना र सिद्धिहरूतिर गतिशील भएका छन् । आफूभित्र साधना एवं सिद्धिहरूको असीम भण्डारलाई समेटेर प्रकाशमान भइरहनुभएका सद्‌गुरुदेव निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

लाखौँ गृहस्थहरूलाई आफ्नो तेजस्विता दिएर प्रेमसम्बन्ध जोड्ने हजुर, जसले गृहस्थहरूका लागि आफ्नो पूरै जीवन प्रदान गर्नुभयो, गृहस्थ शिष्यहरूलाई साधना एवं सिद्धिहरूलाई प्रदान गर्न गर्नका लागि आफ्नो संन्यासजीवनमा सँगै रहेका शिष्य, योगीहरूसितमात्र नभई आफ्नो परिवारसित पनि विद्रोह गरेर गृहस्थ शिष्यहरूलाई आफ्नो जीवनदान गर्नुभयो, आफ्ना साधना एवं सिद्धिहरूको प्रभावबाट गृहस्थ शिष्यहरूका अनगिन्ती कष्टहरूलाई झेलेर उनीहरूका मनोकामना पूर्ण गर्नुभयो ।

जसले शिविरहरूको माध्यमबाट द्वापरयुगमा भगवान् कृष्णले प्रेमरस पान गराएजस्तै गृहस्थ शिष्यहरूलाई प्रेमरस पान गराउनुभयो, जसले बुद्धले जस्तै ध्यानयोग सिकाउनुभयो, जसले शिष्यहरूलाई आफ्नो तपस्यांशबाट तेजस्वी बनाउनुभयो, जसले साधनाहरूको माध्यमबाट उनीहरूलाई साधकत्व प्रदान गरेर देवतुल्य बनाउनुभयो, जसले आफ्ना शिष्यहरूमा पुन: जोश र जवानी भर्नुभयो, जसले आफ्ना शिष्यहरूलाई आत्मलीन हुने क्रिया बुझाएर आत्मसौन्दर्यबाट परिचित गराउनुभयो, जसले प्रेम गर्ने कला सिकाउनुभयो, जसले विश्वलाई शान्ति प्रदान गर्न अमोघ पाठ पढाउनुभयो, जसले गृहस्थ शिष्यहरूको रूपमा विश्वलाई नयाँ दिशा दिनका लागि सिद्धिहरू प्रदान गर्नुभयो, जसले आर्यावर्तलाई पुन: विश्वको आध्यात्मिक गुरु बनाउनका लागि आफ्नो तेजस्वीताबाट कैयौँ दीपक आलोकित गर्नुभयो, यस्ता महातेजस्वी सद्‌गुरुदेव निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

कालको क्रूर विडम्बना, विधाताको लेखनी, गृहस्थ शिष्यहरूको दुर्भाग्य ! यस्ता निखिलेश्वरानन्दज्यू,

जसको छायामुनि अझै पनि यी गृहस्थ शिष्यहरूमा केही गर्ने क्षमता विकसित हुन लागेको थियो, जसको साधना एवं सिद्धिहरूको रसले कण्ठलाई आप्लावित गर्न लागेको थियो, जसमा सिंहको हुँकार गुञ्जन लागेको थियो, जसमा प्रेमरस संचार हुन लागेको थियो, जसमा पाश्चात्य संस्कृतिबाट विमुख भएर भारतीय संस्कृतिको गौरव बढाउने भाव उत्पन्न भएको थियो, जसमा भक्ति होइन शक्ति चाहिन्छ भन्ने उद्घोष हुन लागेको थियो, यस्तो बेला प्रकृति क्रूर भएर निखिलेश्वरानन्दज्यूलाई भौतिक शरीर छोड्न बाध्य गरिन् र्पकतिले । जसले साधना र सिद्धिहरूलाई आफूभित्र आत्मसात गरेर त्यस उचाइलाई स्पर्श गर्नुभएको थियो, जसका कारण उहाँ यस अदृश्य जगतमा पनि सबै ऋषि एवं देवताहरूद्वारा वन्दनीय हुनुहुन्छ । सिद्धाश्रमजस्तो लोक जहाँ वशिष्ठ, विश्वामित्रजस्ता पूर्वकालीन ऋषिहरू सूक्ष्म शरीरमा रहनुहुन्छ, उनीहरू वन्दनाद्वारा प्रेम प्रकट गर्दै हजुरबाट ती साधनाहरूको रहस्यलाई जान्न उत्सुक हुन्छन् जुन गूढतम् हुन् । यस्ता निखिलेश्वरानन्दज्यूलाई प्रकृतिले क्रूर ठट्ठा गरेर गृहस्थ शिष्यहरूबाट छिनेर जसरी अनाथ गरेकी थिइन्, त्यसैले प्रश्न गर्न परेको छ– सद्गुरुदेव निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

निखिलेश्वरानन्दज्यूले सिद्धाश्रम गमन गर्नु विधाताको लेखनीमा सही हुन सक्ला । तर निखिलेश्वरानन्दज्यू पृथ्वीतलमा नहरनुभएकोले गृहस्थ शिष्यहरूमा प्राणतत्त्व भने छैन । पृथ्वीबासीका सबै गृहस्थ शिष्यहरू निष्प्राण र गतिहीन हुन गएका छन्, जसमा हलचल छैन, स्पन्दन छैन । यी गृहस्थ शिष्यहरू पनि भुमरीमा फँसेका छन्, दुःख छ कि जबसम्म यिनीहरूमा कुनै चेतना थिएन, कुनै बुझ्न सक्ने क्षमता थिएन त्यसबेलासम्म हजुरले उनीहरूलाई अंकमाल गर्नुभयो, उनीहरूको दुःखका साथी बन्नुभयो । जब उनीहरूमा बुझ्ने क्षमता आयो, जब उनीहरूलाई केही महसुस हुन थाल्यो, जब उनीहरूलाई हजुरप्रति प्रेम हुन थाल्यो, जब उनीहरूले हजुरको पृथ्वीतलमा उपस्थितिको महत्त्व बुझ्न थाले तब हजुर पनि निष्ठुरी बन्नुभयो । हुन सक्छ गृहस्थ शिष्यहरूले हजुरसित घात-प्रतिघात गरेका थिए, हजुरको आलोचना गरेका थिए, हजुरलाई आवश्यकताभन्दा बढी विषपान गराएका थिए, यो पनि हुन सक्छ हजुरलाई पलपल जलाएका थिए । तर यो पनि सही हो कि हामी जुन समाजमा छौँ, त्यसबाट हामीलाई यही नै प्राप्त भएको छ । हाम्रा चारैतिर जुन परिवेश छ, वातावरण छ त्यसले

हामीलाई यो नै सिकाएको छ । तर यसैको आधारमा छोराछोरीहरूसित मातापिता निष्ठुर बन्न सक्छन् र ? जबकि उनीहरूले सही रूपमा बुझ्न सकेका छैनन् । अहिले बुझ्न सकेका भएर नै होला फेरि सोध्न परिरहेको छ– सद्गुरुदेव निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

सिद्धाश्रमका ऋषिमुनि वशिष्ट, विश्वामित्र, गर्ग, अत्रि, अन्य पूज्य ऋषिवर देवताहरू आफूहरूको बीच मा निखिलेश्वरानन्दज्यूलाई पाएर खुशी भइरहेका होलान् । खुशी पनि किन नहोऊन् ? उनीहरूले अहिले साधना एवं सिद्धिहरूको रहस्य हजुरको श्रीमुखबाट सुन्ने अवसर पाइरहेका छन् । तपाईंहरू सबै नै परमपूज्य गुरुदेव निखिलेश्वरानन्दज्यूलाई आफूबीच पाउनुभएकोमा बधाइका पात्र हुनुहुन्छ !

तर यो ध्रुव सत्य हो कि हजुरले हामीलाई पूर्णरूपमा अनाथ गर्नुभएको छैन, आफ्नो ज्ञानदीपलाई निरन्तर प्रकाशित गर्नका लागि गुरुदेव नन्दकिशोरजी, गुरुदेव कैलाशजी, गुरुदेव अरविन्दजीजस्ता महान् व्यक्तित्व दिनुभएको छ जो हजुरका नै अंश हुनुहुन्छ र हजुरको ज्ञान चेतनाको सूर्य त्रिगुणित भएर ब्रह्माण्डलाई प्रकाशमान गरिरहेका छन् । यो हजुरको नै कृपा हो कि हजुरले हामीलाई जीवनमा एक्लै छोड्नुभएको छैन । हावाहुरीमा पनि हात थाम्नका लागि भौतिकरूपले त्रिमूर्ति दिव्यात्माहरू प्रदान गर्नुभएको छ । तर फेरि पनि हजुरको स्मरण त हुन्छ नै । त्यसैले बुद्धिसित सोधिरहेको छु– सद्गुरुदेव निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

पूज्य निखिलेश्वरानन्दज्यूले जुन उद्देश्यले यो दीपक गृहस्थ शिष्यहरूको रूपमा प्रज्वलित गर्नुभएको छ, त्यो उद्देश्य पूरा होस् । त्यो उद्देश्य कसरी पूरा हुन्छ, यस दीपकको ज्योतिमा तेल कसरी प्रवाहित हुन्छ, यस दीपकलाई कसरी हावाहुरीबाट जोगाउन सकिन्छ भनेर हजुरले हामीलाई सुरक्षित राख्दै रहनुहोस् । म फेरि पनि सोधिरहेको छु– सद्गुरुदेव निखिल ! हजुर कता हुनुहुन्छ ?

आश्चर्य, घोर आश्चर्य ! समस्त ब्रह्माण्डमा विचरण गर्नुहुने, आफ्ना अनेकौं रूप आफ्नोजस्तै बनाएर गृहस्थ-संन्यासीहरूबीच विचरण गर्नुहुने, अनेकौं रूपमा आपत्तिकालमा गृहस्थ शिष्यहरूको रक्षा गर्नुहुने यस्ता अप्रतिम महायोगी अब हामीबीच समुपस्थित नहुनु भएकोले हाम्रो बुद्धि संज्ञाशून्य भएको छ । शून्यमा आफ्ना निखिलेश्वरानन्दलाई निहारिरहेको छ । आत्मा अतृप्त छ र आँखाहरू आकाशमण्डलका ती तारागणहरूलाई मौन भएर निहारिरहेका छन् र सोधिरहेका छन्–

सद्गुरुदेव निखिल ! हजुर कहाँ हुनुहुन्छ ?

# जीवनको निर्माण यसरी गरौँ

श्वेताश्वेतोपनिषदमा देवत्व जगाउने क्रिया पाइन्छ । उपनिषदको तात्पर्य हो कि बिल्कुलै नजिक बसेर गुरुका वचनहरूलाई हृदयमा धारण गर्नु । उपनिषदको अर्थ हो कि हामी गुरुको नजिक बसौँ । केवल शारीरिक दृष्टिबाट मात्र नभई आत्मीक दृष्टिबाट पनि उहाँसित बसेर उहाँको वचनका एक एक शब्दलाई सुनौँ । ठीक त्यसरी सुनौँ जसरी अमृत पिउँछौँ, हृदयमा सधैँ त्यसलाई धारण गरौँ जसबाट हामीले त्यस स्थानलाई प्राप्त गर्न सकौँ जुन जीवनमा दुर्लभ छ । आजको परिवेशमा, आजको वातावरणमा, आजका विचारका मानिसहरूसँगको सम्पर्कले गर्दा तपाईंहरूले यस कुरालाई बुझ्नुहोला अथवा नहोला । महानता के हो र सामान्यता के हो, शायद तपाईंले बुझ्न सक्नुहुन्न होला । तपाईंले बुझ्न थाल्नुभयो भने तपाईं पनि महानतासम्म पुग्नुहुनेछ । त्यहाँको एउटा बेग्लै आनन्द छ । जसले शास्त्रको ज्ञान प्राप्त गरेका छन् उसले शास्त्रको आनन्द के हो भन्ने बुझ्न सक्छ । जसले कालीदास पढ्छ उसले त्यसको आनन्द उठाउँछ कि कालीदासले कति अद्‌भूत कल्पना गरेका थिए । सबैले यस कुरालाई बुझ्न सक्दैनन् ।

श्वेताश्वेतोपनिषद् १०८ उपनिषदहरूमा श्रेष्ठ उपनिषदमा गनिन्छ । यसमा एउटा श्लोक यस्तो छ–

**दधतां सदैव दधतां परिपूर्णरूपं,**
**अज्ञान अन्ध दधतां सततं श्री देवः ।**
**तस्यैव दुर्भाग्य भाग्य वदतां सहितं पवित्रः**
**स्वात्मैव कर्म भुक्ति र्न विधातृ भर्ता ॥**

अति सुन्दर अनि जीवनमा उतार्नलायक श्लोक हो यो । ऋषिले भनेका छन्– भाग्य र दुर्भाग्य भन्ने कुनै कुरा हुँदैन र विधाता भन्ने कुरा पनि हुँदैन । जन्मनासाथ विधाताले तपाईंको निधारमा केही लेखिदिन्छन् भन्ने कुरा शास्त्रमा कहीं पनि उल्लेख भएको छैन ।

शास्त्रले भनेको छ कि अहम् ब्रह्मास्मि, हामी स्वयं ब्रह्म हौँ, विधाता हौँ भने तपाईंको भाग्यमा राम्रो वा नराम्रो लेख्ने अर्को विधाता को हो ? दोस्रो विधाता को उत्पन्न भए ?

विधाताको अर्थ हो ब्रह्म, निर्माण गर्ने, रच्ने । जब विधाता छँदै छैनन् भने भाग्यजस्तो कुनै चीज पनि छैन । यसको निर्माण पनि हामी नै गर्दछौँ । यदि पढे लेखेको छौँ भने मिल्टन, शेक्सपियरलाई पढेर बुझ्न सक्छौँ, अंग्रेजी पढेका छैनौँ भने उनीहरूका काव्यलाई बुझ्न सक्दैनौँ । ठीक यसरी नै हामी ब्रह्म होइनौँ भने भाग्यको निर्माण गर्न सक्दैनौँ । जसले निर्माण गर्न सक्दैन त्यो विनाशकारी हो, त्यसलाई भाग्य भन्न मिल्दैन । यो हाम्रो दुर्भाग्य हो कि हामीसित घर छैन, यो हाम्रो दुर्भाग्य हो कि हामी सफल भएनौँ वा हामीले पूर्णता प्राप्त गरेनौँ । हामीलाई केवल ईश्वरप्रति आश्रित हुने बानी परिसकेको छ ।

यस्तो अति नै ठूलो कुरा गरेको छ उपनिषदले । बाँकी सबै शास्त्रले ईश्वरको अस्तित्वलाई मानेका छन् । तर यस उपनिषदकारले भनेका छन् कि हामी स्वयं ब्रह्म हौँ । भने विधाता को हुन् त ? हामी स्वयं विधाता हौँ । यसैले ब्रह्मको परिभाषा यस श्लोकमा गरिएको छ कि पाँच वर्षका प्रल्हाद पनि पूर्ण ब्रह्म थिए, शुकदेव पाँच वर्षका थिए तब पनि पूर्ण ब्रह्म थिए र कश्यप अस्सी वर्षका भए पनि पूर्ण ब्रह्म थिएनन् । जो गुरुसमीप रहन सक्छ र गुरुको हृदयमा प्रवेश गर्न सक्छ, ऊ ब्रह्म हो । यस श्लोकले दिएको परिभाषा हो यो । जो गुरुसमीप रहन्छ शारीरिकरूपले वा आत्मीकरूपले त्यो ब्रह्म हो । ऊ गुरुको हृदयमा प्रवेश गरोस् । गुरुको पनि तपाईंप्रति स्नेह रहोस् । यो तब रहन्छ जब तपाईंको कार्य हुन्छ । जब तपाईं नजिक हुनुहुन्छ, उहाँको तपाईं आत्मीय हुनुहुनेछ । यति नजिक कि तपाईं उपनिषद बन्न जानुहुन्छ । तपाईं उहाँको

हृदयमा उत्रिनुहुनेछ तब तपाईं ब्रह्म बन्नुहुनेछ ।

ब्रह्मको व्याख्या ऋषिले बिल्कुलै नयाँ ढंगले गरेका छन् । ऋषिले ब्रह्मचारी रहनेलाई ब्रह्म भनेनन्, शास्त्र पढ्नेलाई ब्रह्म भनेनन् र यस्ता सैकडौं ऋषि भए जसले विधिवत ज्ञान प्राप्त गरेका थिएनन्, स्कुलमा पढेका थिएनन्, तैपनि उनीहरू ब्रह्म कहलाइए ।

विश्वामित्र सयौं वर्षसम्म पनि ब्रह्म कहलाइएनन्, ब्रह्मर्षि कहलाइएनन् । राजर्षि कहलाइए । धेरै पछि ब्रह्मर्षि कहलाइए । धेरै समयसम्म उनी गुरुको हृदयमा उत्रन सकेका थिएनन् । आफ्नो अहंकारले गर्दा, घमण्डले गर्दा, बेग्लै धारणाहरूले गर्दा उनी ब्रह्मर्षि कहलाइएनन् । धेरै पछि जब गुरुको हृदयमा उत्रन सके, त्यसपछि उनी ब्रह्मर्षि कहलाइए ।

यसको अर्थ यो भयो कि जोसुकै भए पनि गुरुको हृदयमा जो उत्रन सक्नुपर्छ । गुरुको यति प्रिय बन्न सक्नुपर्छ, उहाँको ओंठमा आफ्नो नाम लेखाउन सक्नुपर्छ, गुरुलाई फलाना को हो भन्ने याद रहून् । हजारौं लाखौंको नाम ओंठमा अंकन हुँदैन । ओंठमा नाम अंकित गर्नका लागि गुरुको हृदयमा उत्रनु आवश्यक हुन्छ र यसको लागि असीम प्रेमको आवश्यकता हुन्छ, समर्पणको आवश्यकता हुन्छ र प्राणसित प्राण जोड्ने क्रिया जब हुन्छ तब प्राणमा उत्रन सकिन्छ । जोबिना संसार शून्यजस्तो लाग्छ उहाँको हृदयमा उत्रन सकिन्छ ।

हृदयमा उत्रनका लागि तपाईंको पर्सनालिटी, तपाईको सुन्दरता, तपाईंको महानता, तपाईंको विद्वता, तपाईंको ज्ञान यी सबै गौण छन् । त्यसैले श्वेताश्वेतोपनिषदले भाग्य र दुर्भाग्यको बिल्कुलै नयाँ व्याख्या गरेको छ । उसले सबै कुरा तपाईंको हातमा सुम्पिदिएको छ कि तपाईं स्वयं ब्रह्म हुनुहुन्छ, तपाईं स्वयं भाग्यनिर्माता हुनुहुन्छ, तपाईं स्वयं दुर्भाग्यनिर्माता हुनुहुन्छ, तपाईं स्वयं उपनिषदकार हुनुहुन्छ र तपाईं स्वयं अउपनिषदकार हुनुहुन्छ । तपाईं स्वयंले गुरुको हृदयमा उत्रने क्षमता राख्नुहुन्छ, तपाईं स्वयंले गुरुको हृदयमा नउत्रिने क्षमता राख्नुहुन्छ । सारा बागदोर तपाईंको हातमा सुम्पिदिएका छन् त्यस उपनिषदकारले । मेरो विचारमा १०८ उपनिषदकारहरूमा यिनले बिल्कुल यथार्थ चिन्तन गरेका छन् ।

यो श्लोक सुनको अक्षरले लेख्न योग्य छ, किनकि पहिलोपटक महसुस भयो कि हामी सामान्य मनुष्य होइनौं, हामी नियन्ता हौं, निर्माणकर्ता हौं । म धेरै कुरा हुँ र म स्वयंको निर्माण गर्ने हुँ र म सामान्य शरीरबाट प्रारम्भ भएर धेरै उचाइसम्म पुग्ने हुँ ।

जन्मने बेलामा व्यक्ति महापुरुष भएर जन्मेको हुँदैन । एकजना पनि महापुरुष जन्मेका थिएनन् । पछि गएर महापुरुष बनेका हुन् । शुरुमा राम आफैंमा महापुरुष थिएनन्, न कृष्ण महापुरुष थिए । राजाका छोराहरू थिए ती सबै । शुरुमा सामान्य बालक थिए, त्यसरी नै दौडन्थे, खेल्थे । त्यस्तै थिए जस्तो हामी छौं । पछि गएर उनीहरूले त्यस कुरालाई बुझे जसको बारेमा मैले भर्खरै उल्लेख गरेको थिएँ कि यदि केही निर्माण गर्नुछ र केही बन्नुछ भने यसको बागदोर आफ्नै हातमा हुन्छ । जब यो भाव तपाईंको मनमा रहन्छ तब यो भाव पनि रहन्छ कि कुनै पनि काम सानोठूलो हुँदैन । यस्तो भाव होस् कि म स्वयं आफ्नो होइन, म त कसैको हृदयमा उत्रिसकेको छु ।

जब उत्रिसकेको छु भने यो उहाँको ड्युटी हो कि उहाँले हामीलाई त्यस स्थानमा पुऱ्याउनुहुन्छ । पत्नी विवाहपछि निश्चिन्त हुन्छिन् कि यो पतिको ड्युटी हो कि झुपडीमा राखून् वा महलमा, गहना पहिराऊन् वा नपहिराऊन्, मारुन् वा प्रेम गरुन् । उनले आफ्नो हात पतिको हातमा सुम्पिदिएकी हुन्छिन् ।

तपाईं गाउनका लागि मात्रै गाउनुहुन्छ– अब सौंप दिया इस जीवन का सब भार तुम्हारे हाथों में । है जीत तुम्हारे हाथों में और हार तुम्हारे हाथों में । तर जीवनमा यो भाव उतार्ने क्रिया हुनुपर्दछ, केवल बोल्ने क्रिया मात्रै भएर हुँदैन । बोल्नाले केही हुनेवाला छैन । गर्ने क्रियाले तपाईं गुरुको हृदयमा उत्रन सक्नुहुनेछ । अन्तर यहीं छ । जब तपाईं आफैंले आफैंलाई पूर्णरूपमा समर्पित गर्नुहुन्छ त ब्रह्म बन्नुहुन्छ ।

तपाईं केवल गाउनुहुन्छ, अब सौंप दिया इस जीवन का सब भार तुम्हारे हाथों में । है जीत तुम्हारे हाथों में और हार तुम्हारे हाथों में । तर जीवनमा यो भाव उतार्ने क्रिया हुनुपर्दछ, केवल बोल्ने मात्रै क्रिया हुनु हुँदैन । बोल्नाले केवल आफैँसँग मात्रै रहनेछ । गर्ने क्रियाले तपाईं उहाँको हृदयमा उत्रन सक्नुहुनेछ ।

पूर्णरूपले समर्पित हुने अर्थ यो हो कि तपाईं आफ्नो अस्तित्व हराउनुहोस्, म को हुँ भन्ने बिर्सनुहोस् । तब मात्र तपाईंले केही प्राप्त गर्नुहुनेछ । जसले गुमाएका छन् तिनैले सब पाएका छन् । म शिष्यहरूसित बस्छु भने एक घण्टाजति गुमाउँछु । यसरी गुमाउँदिन भने तपाईंहरूको प्रेम, तपाईंहरूको समर्पण पनि पाउँदिन । नगुमाइकन केही पनि प्राप्त गर्न सकिन्न र गुमाउनका लागि चिन्तन गर्न सकिन्न । त्यसका लागि त भित्र भाव हुनुपर्दछ र भित्रको भावका लागि संकल्पशक्तिको आवश्यकता हुन्छ । संकल्पशक्तिले नै व्यक्तिलाई पूर्ण उचाइसम्म पुऱ्याउन सक्छ ।

हामी द्वन्द्वमा जिउँछौं र पूरै जीवन द्वन्द्वमा नै बिताउँछौं । गृहस्थ होऊन् वा संन्यासी सम्पूर्ण जीवन द्वन्द्वमा बित्छ । के गरौं के नगरौं भनेर हामी जीवनको अस्सी वर्षको उमेरमा सोच्ने गर्छौं । प्रतिक्षण तपाईंको मनमा तर्क, वितर्क चल्दैरहन्छ र तपाईं निर्णय गर्न पाउनुहुन्न । मानिसहरूले जहाँ तपाईंलाई घचेट्छन्, तपाईं त्यतै घचेटिनुहुन्छ किनकि तपाईं आफ्नो हातमा हुनुहुन्न । यस्तो व्यक्ति साधारण हुन्छ । केही व्यक्ति, लाखौँमा एकदुई व्यक्ति आफ्नो जीवनलाई आफ्नै हातमा राख्छन् ।

औरंगजेब जब राजा बने, उनलाई हात्तीमा बसाइयो । हामीकहाँ हात्तीमा बसाएर राजतिलक गर्ने परम्परा छ । औरंगजेब सिँढी लगाएर पहिलोपटक हात्तीमा बसे । बसिसकेपछि उनले हात्तीलाई हिँडाउन लगाम मागे । ऊँट, घोडाका जस्तै हात्तीको पनि लगाम हुन्छ भन्ने उनले सोचेका थिए ।

उनका सेवकले भन्यो– 'शहंशाह ए आलम ! हात्तीको लगाम हुँदैन ।'

उनी तुरुन्त तल ओर्ले । उनले भने कि म यस्तो सवारी गर्दिन जसको लगाम हुँदैन । यो सवारी म गर्न सक्दिन । यो मेरो कामको छैन ।

त्यो जीवन पनि कामको छैन जसको लगाम तपाईंको हातमा हुँदैन । तपाईंको अर्थ हो कि शिष्य र गुरुको एकात्म किनकि तपाईंले त आफूलाई समर्पित गरिसक्नुभयो । त्यो जीवन जिउनु बेकार हुन्छ जुन

तपाईंको हातमा हुँदैन । त्यो जीवन सार्थक छ जसमा गुरुसित सामीप्यता हुन्छ, प्रसन्नताका साथ सामीप्यता हुन्छ, पूर्णताका साथ सामीप्यता हुन्छ, प्रेमका साथ सामीप्यता हुन्छ । बाध्यतावश सामीप्यता हुन सक्दैन, छल, कपट र झूटका साथ सामीप्यता हुन सक्दैन ।

यदि तपाईंले गाली गर्नुहुन्छ र कसैले त्यसलाई सुने पनि नसुने पनि, गुरुले उसलाई सुने पनि नसुने पनि वातावरणमा त्यो कुरा तैरिन्छ र तपाईंलाई तलको धरातलमा झारिदिन्छ । तपाईं जब यस्तो कुरा गर्नुहुन्छ, निन्दा गर्नुहुन्छ, गाली गर्नुहुन्छ भने आफैंमा एक सिँढी तल झर्नुहुन्छ । जब तपाईं तपाईं त्यस मुठ्ठीभर मानिसहरूमध्ये एक बन्छु, बन्छु भने नानक बन्छु, वीर विक्रमादित्य बन्छु भन्ने चिन्तन गर्नुहुन्छ तब तपाईं एक कदम अघि बढ्नुहुन्छ । विक्रमादित्य भौतिक दृष्टिले एक पूर्णता प्राप्त राजा थिए भने नानकले फक्कड प्राप्त गरेका थिए । दुवैमध्ये जिउन चाहनुहुन्छ भने राजाजस्तै जिउनुहोस् । तर गधाजस्तै काम गर्नुहुन्छ भने मात्र राजाले जस्तै जिउन सक्नुहुन्छ । शेक्सपियरले भनेका छन् कि दिनमा गधाजस्तै जिउनुपर्दछ र रातमा राजाले जस्तै जिउनुपर्दछ ।

श्वेताश्वेतोपनिषदमा भनिएको छ कि चाहे बालक होस्, पुरुष होस् वा स्त्री, जसले जीवन आफ्नो हातमा राख्दछ वा गुरुको हातमा राख्छ, ऊ नै सफल हुन सक्दछ । यो बेग्लै पाता हो र योचाहिँ बेग्लै पाता हो भनेर हामी सिक्कालाई दुई भागमा बाँड्न सक्दैनौं । सिक्काको दुइटा भाग बेग्लाबेग्लै हुँदैनन् । एउटै सिक्काका दुई भाग हुन्छन् ।

यसैप्रकार एकै पर्सनालिटीको दुई भाग हुन्छ जसमा एकलाई गुरु भनिन्छ, अर्कोलाई शिष्य । दुवैलाई मिलाएर एउटा पूरा सिक्का बन्दछ र त्यो बजारमा चल्छ, जीवनमा चल्छ ।

जब शिष्य प्रसन्नताका साथ गुरुमा मिल्छ भने यो मिलन निष्ठताका साथ हुन्छ । एउटा निष्ठताको अर्थ हो निरन्तर गुरु कार्यमा संलग्न र सचेष्ट रहनु । मेरो भनाइको अर्थ यो होइन कि तपाईं मेरो काम गर्नुस् । म त केवल श्लोकको अर्थलाई स्पष्ट गरिरहेको छु ।

तपाईंले गुरुलाई देख्नुभएको होस् वा नहोस् तर प्रतिक्षण उहाँको कार्यमा संलग्न रहनुहुन्छ भने, सचेष्ट रहनुहुन्छ, निरन्तर अघि बढेर उहाँको कार्यलाई गर्नुहुन्छ भने मनमा एउटा सन्तोष हुन्छ कि म साँच्चिकै एक क्षणका लागि जिएँ, त्यस क्षणलाई फ्याँकिन । त्यस क्षणमा मैले केही सृजना गरेँ, व्यर्थ पठाइन त्यस क्षणलाई । त्यस क्षणमा केही रचना गरेँ, कसैलाई गाली दिइन । त्यस क्षणमा कसैलाई स्मरण गरेँ, कसैको हृदयमा उत्रने क्रिया गरेँ । क्षण तपाईंको हो । तपाईं चाहनुहुन्छ भने दुई घण्टा ताशमा बिताउनुहोस् अथवा त्यस समयलाई चिन्तन गरेर वा काम गरेर बिताउनुहोस् ।

भाग्य वा जीवन त तपाईंको हातमा छ । सामान्य मनुष्य केवल जीवन जिएर बिताउँछन् । तपाईं सडकमा गएर हेर्नुहुन्छ भने त्यहाँ सबै सामान्य मानिस हुन्छन् । उनीहरूमा कुनै विशेषता हुँदैन । उनीहरूलाई थाहा नै छैन कि उनीहरूको वरिपरि को बस्छन् ।

शिव कहाँ बस्छन् यो मलाई थाहा छ किनकि हरेक क्षण मैले सृजना गरेको छु । यस पदलाई प्राप्त

गर्नका लागि पलपल आफ्नो रगतलाई सुकाएको छु। त्यसैले त आज पूरै देश, पूरा विश्व मान्दछ कि यो कुनै पर्सनालिटी हो। त्यस सृजनालाई सम्पन्न गर्नका लागि आफैँले आफैँलाई जलाउनै पर्दछ।

रगत सुक्दछ भने फेरि बन्छ, मासु गल्दछ भने फेरि पलाउँछ, तर गएको समय फेरि आउँदैन। यदि मासु गलेर कंकाल नै हुन पुगे पनि फेरि मासु पलाउँछ। मासु बढाउने कुरा धेरैले ल्याउँलान्। कसैले मिठाइ खुवाउलान्, कसैले घिउ पिलाउलान्, कसैले मालिस गरिदेलान्, त्यसपछि त मासु बढ्छ र मोटाइन्छ।

तर कसैले मलाई ज्ञान सिकाउन सक्दैन, धर्मशास्त्र सिकाउन सक्दैन, धर्मशास्त्रको सार बताउन सक्दैन। कसैले भाग्यको निर्माण गरेर मलाई दिन सक्दैन। मलाई महानता कसैले दिन सक्दैन। ती सबै त मैले स्वयं प्राप्त गर्नुपर्ने हुन्छ। त्यसका लागि रचनात्मक चिन्तन गर्नुपर्ला। त्यसका लागि प्रेम गर्नुपर्ला, कसैको हृदयमा उत्रनुपर्ला र एकनिष्ठ हुनुपर्ला।

किनारामा उभिएर नदी अथवा तलाउलाई पार गर्न सकिन्न। तपाईंले गुरुलाई पनि लिएर हिँड्ने, बाहिरको काम पनि गर्ने र अन्य कुराहरू पनि एकैसाथ गर्ने सोचाइ राख्नुहुन्छ भने यो एकनिष्ठता भएन। एकनिष्ठताको अर्थ त यो हो कि एकचित्त भएर तीरजस्तै एउटा लक्ष्यमा अचूक हुनु। जो तीरजस्तै भएर हिँड्छ उसले जीवनमा सर्वोच्चता प्राप्त गर्दछ र जसले यसलाई प्राप्त गर्दछ उसलाई संसारले देख्छ। जसलाई संसारले देख्छ उसको जीवन धन्य हुन्छ।

र, तपाईंका पिँढीहरू जो स्वर्गमा बस्नुभएको छ, उहाँहरू पनि धन्य अनुभव गर्छन् कि हाम्रो कुलमा कोही त जन्मियो जो विख्यात् छ, जसलाई सबैले स्मरण गर्छन्, जसको आवाजमा लाखौं मानिस एकत्रित हुन जान्छन्, जसको आवाजमा लाखौं मानिस नाच्न लाग्छन्, झुम्न लाग्छन्। उहाँहरूलाई पनि लाग्छ कि केही त यस बालकमा छ। उनीहरूलाई ऊ प्यारो अनुभव हुन्छ।

यदि सिक्ने क्रिया हुन्छ, निरन्तर अघि बढ्ने क्रिया हुन्छ, यदि प्रेम गर्ने क्रिया हुन्छ भने व्यक्ति पहिलो दिनदेखि लिएर अन्तिम दिनसम्म बालक नै रहन्छ। यी क्रियाहरू आफ्नै हातमा हुन्छन्।

यस उपनिषदमा भनिएको छ कि सबै कुरा तपाईंको हातमा छ। तपाईं कस्तो जीवन जिउन चाहनुहुन्छ, घटिया, रुँदै, गिड्गिडाउँदै दुःखमा आफ्नो जीवनलाई बर्बाद गर्दै वा आफैँमा एकनिष्ठता प्राप्त गर्दै, जीवनमा प्रत्येक क्षण आनन्द प्राप्त गर्दै मुस्कुराहटका साथ, चिन्तनका साथ, कार्यहरूमा डुब्दै र आफ्नो लक्ष्यतिर बढ्दै। कस्तो जीवन तपाईं व्यतीत गर्न चाहनुहुन्छ, त्यो तपाईंको हातमा छ र यही तपाईंको भाग्य निर्माण गर्ने तथ्य हो। यसैले म हरक्षण रचनात्मक बन्नतिर अग्रसर रहन्छु। यहाँ आउनुभन्दा पहिले चार पाना लेखेर आएको छु। अरू पनि लेखेको छु ती मौलिक लेखाइ हुन्। जे बोलिरहेको छु त्यो मौलिक हो किनकि म मौलिक व्यक्ति हुँ, नक्कल गर्ने होइन। म जूठो खाँदिन, झूटो बोल्दिन।

मानिसहरूले बोलिसकेका शब्दहरूलाई आफ्नो शब्दमा सुनाउँदिन। जसले आजसम्म बोलेका छैनन् त्यो प्रवचन म बोल्छु। पछिल्ला पचास वर्षमा कसैले भनेका कुरालाई मैले सुनाएको छैन। जेजति मैले अनुभव गरेँ त्यो म सुनाउँछु। जे श्लोक छ त्यसको मौलिक व्याख्या गरेर सुनाउँछु। जे जति मैले भनेको छु त्यो कालजयी छ, कालले त्यसलाई मेटाउन सक्दैन।

जुन श्लोक छ त्यसको व्याख्या जसले लेखेको हो त्यस ऋषिले गरेका होलान्, अरूले कसैले गरेका छैनन् होला। त्यसको तथ्य बुझेका छैनन् होला, त्यसको चिन्तन बुझेका छैनन् होला। त्यसको नवीन ढंगले चिन्तन, व्याख्या हुनु आवश्यक छ। यो मेरो जीवनको लक्ष्य हो, उद्देश्य हो।

तपाईंको भाग्य दुर्भाग्य, आयु पूर्णायु, अमरत्व र मृत्यु, पूर्णता र अपूर्णता सबै कुरा तपाईंको हातमा छ, तर त्यसको Base एकनिष्ठता हो।

तपाईं जीवनमा एकनिष्ठ बन्नुहोस्, म हृदयदेखि नै आशीर्वाद दिन्छु।

–श्री सद्गुरुदेव परमहंस स्वामी निखिलेश्वरानन्द

# निखिलेश्वरानन्द पंचरत्न स्तवन

ॐ नमस्ते सते सर्व-लोकाश्रयाय, नमस्ते चिते विश्व-रूपात्मकाय ।
नमो द्वैत तत्वाय मुक्ति-प्रदाय, नमो ब्रह्मणे व्यापिने निर्गुणाय ॥१॥
त्वमेकं शरण्यं त्वमेकं वरेण्यम्, त्वमेकं जगत-कारणं विश्व-रूपम् ।
त्वमेकं जगत् कर्तृ-पातृ-प्रहर्तृ त्वमेकं परं निश्चलं निर्विकल्पम् ॥२॥
भयानां भयं भीषणं भीषणानाम् गतिः प्राणिनां पावनं पावनानाम् ।
महोच्चै पदानां नियन्तृ त्वमेकम् परेषां परं रक्षकं रक्षकानाम् ॥३॥
परेशं प्रभो सर्व रूपाविनाशिन् अनिर्देश्य सर्वेन्द्रियागम्य सत्यं ।
अचिन्त्याक्षरं व्यापकाव्यक्त-तत्वं, जगद् भासकाधीश पायदपायात् ॥४॥
तदेकं स्मरामस्तदेकं जपामः तदेकं जगत् साक्षि-रूपं नमामः ।
तदेकं निधानं निरालम्बमीशम् भवाम्बोधि-पोतं शरण्यं व्रजामः ॥५॥
पंच रत्नमिदं स्तोत्रं ब्रह्मणः परमात्मनः ।
यः पठेत् प्रयतो भूत्वा ब्रह्म सायुज्य माप्नुयात् ॥६॥

अर्थात् हे गुरुदेव ! हजुर मेरो जीवनका आराध्य, हजुर नित्य हुनुहुन्छ, समस्त लोकका आश्रय हुनुहुन्छ, हजुरलाई नमस्कार गर्दछु । हे योगीराज ! हजुर ज्ञानस्वरुप हुनुहुन्छ, विश्वका आत्मास्वरुप हुनुहुन्छ, हजुर अद्वैत तत्त्वप्रदायक मुक्तिदायक हुनुहुन्छ हजुरलाई नमस्कार छ । सर्वव्यापी निर्गुण ब्रह्म हुनुहुन्छ, सगुणरुपमा हजुर हामी समस्त शिष्यहरुको सामु उपस्थित हुनुहोस्, हजुरलाई नमस्कार छ ।

हजुरमात्रै हामी समस्त शिष्यहरुका एकमात्र 'शरण्य' अर्थात् आश्रय हुनुहुन्छ, हजुर यस संसारमा हाम्रा लागि अद्वितीय वरणीय हुनुहुन्छ, हजुर नै समस्त सिद्धिहरुका एकमात्र कारण हुनुहुन्छ, हजुर विश्वरुप हुनुहुन्छ, हजुरको श्रीमुख र कण्ठमा सम्पूर्ण विश्व समाएको छ जसको हामीले कैयौं पटक अनुभव गरेका छौं । हजुर समस्त सिद्धिहरुका संसारका श्रेष्ठ कर्ता, निर्माण कर्ता, पालनकर्ता र संहार कर्ता हुनहुन्छ ।

हजुर निश्चल र विविध कल्पनाहरुबाट रहित पूर्णता प्राप्त षोडशकलायुक्त पूर्ण पुरुष हुनुहुन्छ, हजुरलाई हामी शिष्यहरुको नमस्कार छ ।

हजुर भयका पनि भय हुनुहुन्छ अर्थात् हजुरको नामको स्मरण गर्नासाथै भय समाप्त हुन जान्छ, हजुर विपत्तिका लागि विपत्तिस्वरुप हुनुहुन्छ, हजुरलाई देख्नासाथ वा हजुरको नाम स्मरण गर्नासाथ हामीहरुका विपत्तिहरु समाप्त हुन जान्छन् । हामी सबै शिष्यहरुका हजुर एकमात्र गति हुनुहुन्छ । हजुर पवित्रताका साक्षात्स्वरुप हुनुहुन्छ, उच्चस्थानमा जति पनि महाशक्तिहरु छन्, हजुर उनीहरुका आधारस्वरुप हुनुहुन्छ, हजुर संसारका सबै श्रेष्ठ पदार्थहरुबाट प्रेरित हुनुहुन्छ र रक्षकहरुका पूर्णरुपले रुक्षक हुनुहुन्छ, हामी सबै शिष्यहरु हजुरलाई भक्तिभावका साथ प्रणाम गर्दछौं ।

हे तपस्वी, हे प्रभु, समस्त शिष्यहरुका हृदयमा विराजमान अविनाशीरुपमा रहनुहुँदै, समस्त शिष्यहरुको कल्याण गर्नुहुने र समस्त प्रकारका इन्द्रियहरुमा पूर्णरुपमा नियन्त्रण गर्नुहुने हजुर पूर्णरुपले अगोचर भए पनि हामी सबैका सामु साक्षात् देहरुपमा उपस्थित हुनुहुन्छ । हे सत्यस्वरुप, हे अचिन्त्य, हे अक्षर, हे व्यापक, हे बताउन नसकिने तत्त्व, हे ब्रह्मस्वरुप, हे मेरा आराध्य, हे मेरो प्राणमा निवास गर्नुहुने, हामी सबै शिष्यहरु हजुरको चरणमा छौं, हजुरले आफ्नो भक्ति, आफ्नो ज्ञान र आफ्नो स्नेह प्रदान गर्नुहोस्, हामी हजुरलाई भक्तिभावले प्रणाम गर्दछौं ।

हामी त अन्य कुनै इष्टलाई जान्दैनौं । न त हामीलाई मन्त्रज्ञान नै छ, न त तन्त्रज्ञान नै । न हामीलाई पूजाविधि आउँछ, न त साधना रहस्य नै । हामी त केवल गुरुमन्त्रको जप गर्नमा समर्थ छौं, पल पलमा हजुरद्धारा फैलाइएको मायाबाट हामी कैयौंपटक भ्रमित हुन जान्छौं र हजुरलाई सामान्य मान सम्झने गल्ती गर्दछौं । हजुरलाई सामान्य मानिसले जस्तै हाँस्तै र उदास हुँदै गर्नुभएको देख्छौं र विचरण गर्नुहुँदै, भन्दै र सुन्दै जब अनुभव गर्छौं तब हामी सामान्य शिष्य भ्रममा पर्न जान्छौं र हाम्रा सारा ज्ञान एकक्षणका लागि तिरोहित हुन जान्छन् । हामी बारम्बार जन्म लिन्छौं, संसारको दुःखमा, संसारका समस्याहरु र गृहस्थहरु दिक्दारीमा डुब्दै उत्रदै हजुरको राम्ररी चिन्तन गर्न सक्दैनौं, हामीलाई अरू केही पनि आउँदैन, हामी त केवल आतुर कण्ठले 'गुरुदेव' शब्दको उच्चारण मात्रै गर्न सक्दछौं र यसै शब्दको माध्यमबाट हजुरको माध्यमबाट सिद्धाश्रम प्राप्त गरेर पूर्ण ब्रह्ममा लीन हुन जान चाहन्छौं, हामी त केवल यति जान्दछौं कि हजुर नै हाम्रा आश्रयभूत हुनुहुन्छ, हजुर नै हाम्रा जीवनका आधार हुनुहुन्छ, हजुर नै हाम्रो भवसागरको जहाजस्वरुप हुनुहुन्छ, हामी त केवल हजुरको नै आश्रय ग्रहण गर्दछौं र हजुरलाई हामी सबै श्रद्धायुक्त प्रणाम गर्छौं ।

जसले यस पंचरत्न स्तवनको नित्य पाठ गर्दछ, उसले निश्चय नै समस्त विकार हरुबाट मुक्त भएर ब्रह्मस्वरुप गुरुचरणमा लीन हुने सामर्थ्य प्राप्त गर्दछ । प्रतिदिन यस स्तवनको पाठ गर्नुपर्दछ, अथवा सोमबार र बिहीबार अवश्यै यसको पाठ गरेपछि मात्रै अन्नजल ग्रहण गर्नुपर्दछ ।

जय गुरुदेव !

# श्री निखिलेश्वरानन्द पूजन

गुरु पूजनपछि निखिल स्तवनको सस्वर पाठ गर्नु आफैँमा सौभाग्य र सफलताको सूचक हो । त्यसै त निखिल स्तवनको एकएक श्लोक आफैँमा एकएक मन्त्र हो, यसको उच्चारण मात्रैले पनि साधकलाई फल प्राप्त हुन्छ । तैपनि संस्कार र प्रारब्धको प्रभावले साधकद्वारा गरिएको पूजाकर्म प्राय: देवताहरूसम्म पुग्न सक्दैन । यही कारण सफलता ढिलो हुन पुग्छ । यदि साधकले विशेष मन्त्रले चैतन्य एवं प्राण प्रतिष्ठित गरिएको निखिलेश्वरानन्द चैतन्य मालालाई धारण गरेर यस स्तवनको पाठ गर्दछ भने उसको हृदयपक्ष जागृत हुन्छ । यसपछि उसको सीधा सम्पर्क सद्गुरुदेवसित हुन्छ र ऊद्वारा गरिएको स्तवन पाठ गुरुदेवसम्म पुगेर उसको कल्याण हुन्छ। यस मालाको धारणबाटै पनि निखिलेश्वर गुरुको निकटता प्राप्त हुन्छ ।

ब्रह्ममुहूर्तमा उठेर स्नानादिपछि पूजाकोठालाई शुद्ध गरेपछि धोती तथा गुरु चादर धारण गरेर पूर्व वा उत्तरतिर मुख फर्काएर पवित्र आसनमा बसौँ । सामु चौकीमा रातो वा पहेँलो वस्त्र ओछ्याएर गुरुको तस्विरलाई स्थापित गरौँ । धूप तथा दीयोलाई आफ्नो दाहिनेतिर बालेर निम्न मन्त्र उच्चारण गरेर तत्वाचमन गरौँ–

### तत्वाचमन

**ॐ निं आत्म तत्वं शोधयामि नमः ।**
**ॐ खिं विद्या तत्वं शोधयामि नमः ।**
**ॐ लं शिव तत्वं शोधयामि नमः ।**

निम्न मन्त्र उच्चारण गर्दै हात धोऔँ–

**ॐ निं खिं लं ॐ– सर्व तत्वं शोधयामि नमः ।**

### आत्म प्राणप्रतिष्ठा

आफ्नो हृदयमा दाहिने हात राखौँ तथा त्यस परमशक्तिलाई आफूभित्र समाहित गर्दै निम्न मन्त्रको पाठ गरौँ–

**ॐ आं ह्रीं क्रों मम प्राणा इह प्राणाः ।**
**ॐ आं ह्रीं क्रों मम जीव इह स्थितः ।**
**ॐ आं ह्रीं क्रों मम सर्वेन्द्रियाणि ।**
**ॐ आं ह्रीं क्रों मम वाङ्मनस्त्वक् चक्षुः श्रोत्र जिह्वा घ्राण प्राणा इहागत्य सुखं चिरं तिष्ठन्तु स्वाहा ।**

### विनियोग

दाहिने हातमा जल लिएर निम्न मन्त्रको उच्चारण गरौँ–

**ॐ अस्य श्री निखिल स्तवन मंत्र पाठस्य ब्रह्माण्डेश्वर ऋषिः, शिखरिणी–त्रिष्टुप्छन्दः, निं बीजं, खिं शक्तिः, लं कीलकं, मम धर्मार्थ काम मोक्षार्थं गुरु सानिध्य प्राप्ति निमित्तं च अस्य पाठे विनियोगः ।** (भूमिमा जल छोडौँ)

### न्यास (ऋष्यादि)

निम्न मन्त्रको उच्चारण गर्दै विभिन्न अंगहरूको स्पर्श गरौँ–

**ॐ ब्रह्माण्डेश्वर ऋषये नमः ।** (शिरसि)
**ॐ शिखरिणी त्रिष्टुप्छन्दसे नमः ।** (मुखे)
**ॐ निखिलेश्वरानन्द देवतायै नमः** (हृदये)
**ॐ निं बीजाय नमः ।** (गुह्ये)
**ॐ खिं शक्तये नमः ।** (पादयोः)
**ॐ लं कीलकाय नमः।** (नाभौ)
**विनियोगाय नमः ।** (सर्वाङ्गे)

शिरदेखि पाउसम्म तथा पाउदेखि शिरसम्म सबै अंगहरूको स्पर्श गरौँ ।

### संकल्प

दाहिने हातमा जल लिएर त्यसमा कुमकुम र अक्षता मिलाएर निम्न सन्दर्भको उच्चारण गर्दै संकल्प गरौँ–

**ॐ स्वस्ति श्री भगवान श्री सच्चिदानन्दादि सिद्धाश्रम स्थित ऋषि परम्परा परिपूते, श्री श्वेत वाराहकल्पे जम्बूद्वीपे भरतखण्डे भारतवर्षे कलियुगे कलिप्रथमचरणे अमुक मासे** (महिना) **अमुक वासरे** (दिन) **अमुकगोत्रीयः** (आफ्नो गोत्र) **अमुकशर्माऽहं** (नाम) **अनेकजन्मकृत सकल अनिष्ट निवृत्ति पूर्वकं परम गुरु, परात्पर गुरु, पारमेष्ठि गुरु प्रीत्यर्थं निखिल स्तवनस्य अहं करिस्ये ।** (जल भूमिमा छोडौँ)

**ध्यान**

हात जोडेर फक्रेको कमलको फूलमा विराजमान परमपूज्य गुरुदेवको ध्यान गरौँ–

**येनोदात्त तपः चपेन सततं संन्यस्तमाभूषितं,**
**ब्रह्मानन्द रसेन सिक्त मनसा शिष्याश्च संभाविताः ॥**
**ब्रह्माण्डं नवराग रञ्जित वपुः हस्तामलकवद्धृतं,**
**सोऽयं भूति विभूषितः गुरुवरः निखिलेश्वरः पातु माम् ॥**
**सिद्धाश्रमोऽयं परिपूर्ण रूपं, सिद्धाश्रमोऽयं दिव्यं वरेण्यम्,**
**न देवं न योगं न पूर्णं वरेण्यं, सिद्धाश्रमोऽयं प्रणम्यं नमामि ॥**

गुरुको तस्विरको अगाडि सानो थाली राखेर त्यसमा कुमकुमले स्वस्तिक बनाएर एउटा सानो कलशमा जल भरेर राखौँ । एउटा पात्रमा चामल भरेर कलशमाथि राखौँ । निखिलेश्वरानन्द चैतन्य मालाको सुमेरुलाई जलले स्नान गराएर कलशमाथि पात्रमा स्थापित गरौँ । त्यसको सुमेरुमा कुमकुमले तिलक लगइदेऔँ तथा चामल अर्पित गरौँ । त्यसपछि निम्न मुद्राहरूद्वारा भगवद् परमपूज्य निखिलेश्वरानन्दज्यूको आवाहन गरौँ–

**भगवत्पाद निखिलेश्वरानन्दः– इहागच्छ, इहागच्छ** (आवाहनी मुद्रा)

**भगवत्पाद निखिलेश्वरानन्दः– इह तिष्ठ, इह तिष्ठ** (संस्थापनी मुद्रा)

**भगवत्पाद निखिलेश्वरानन्दः– इह सन्निधेहि, इह सन्निधेहि** (सन्निरोधिनी मुद्रा)

**भगवत्पाद निखिलेश्वरानन्दः– इह सन्निधत्स्व, इह सन्निधत्स्व** (सन्निधापिनी मुद्रा)

**भगवत्पाद निखिलेश्वरानन्दः– इह सम्मुखो भव, इह सम्मुखो भव** (सम्मुखीकरण मुद्रा)

हात जोडेर '**अत्राधिष्ठानंकुरु, मम पूजां गृहाण**' भन्दै समस्त पूजन परमपूज्य सद्गुरुदेवलाई समर्पित गरौँ । यसपछि हात जोडेर ध्यान गरौँ–

**ब्रह्मानन्दं परम सुखदं केवलं ज्ञानमूर्तिं,**
**द्वन्द्वातीतं गगनसदृशं तत्वमस्यादि लक्ष्यं ।**
**एकं नित्यं विमल मचलं सर्वधीसाक्षिभूतं,**
**भावातीतं त्रिगुणरहितं सद्गुरुं तन्नमामि ॥**

यसपछि दाहिने हातमा फुल लिएर परमपूज्य सद्गुरुदेवको साक्षात् उपस्थितिको भावना गर्दै माला अर्पण गरौँ र निम्न मन्त्रबाट पूजन आरम्भ गरौँ–

**ॐ ऐं इमं गन्धं समर्पयामि श्री निखिलेश्वरानन्दाय गुरवे नमः ।**

**ॐ ऐं इमं सचन्दनं अक्षतं समर्पयामि श्री निखिलेश्वरानन्दाय गुरवे नमः ।**

**ॐ ऐं इमं धूपं आघ्रापयामि श्री निखिलेश्वरानन्दाय गुरवे नमः ।**

**ॐ ऐं इमं दीपं दर्शयामि श्री निखिलेश्वरानन्दाय गुरुवे नमः ।**

**ॐ ऐं इदं नैवेद्यं निवेदयामि श्री निखिलेश्वरानन्दाय गुरुवे नमः ।**

यसपछि निखिलेश्वरानन्द चैतन्य मालालाई गलामा धारण गरौँ र आँखा बन्द गरेर पाँच मिनेटसम्म पूर्ण तन्मयताले गुरुमन्त्रको मानसिक जप गरौँ–

**॥ ॐ परम तत्वाय नारायणाय गुरुभ्यो नमः ॥**

यसपछि निखिलेश्वरानन्द स्तवनको पाठ आरम्भ गरौँ । यसरी नौ हप्तासम्म विधिपूर्वक पाठ गर्नाले अनेकौँ अनुभव प्राप्त हुन्छ । जय गुरुदेव !

आवाहनी मुद्रा

संस्थापनी मुद्रा

सन्निरोधिनी मुद्रा

सन्निधापिनी मुद्रा

संमुखीकरण मुद्रा

# गोरखगुफा जाऔं - आठौं रोट महोत्सव मनाऔं

सिद्धाश्रम शक्ति केन्द्रले राष्ट्रगुरु श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट अर्पण कार्यक्रमलाई सम्पन्न गर्दै आएको पनि सात वर्ष पूरा भएर यसै वर्षको आठ वर्ष हुन गइरहेको छ। आगामी जेष्ठ ३ देखिको वैशाखी पूर्णिमादेखि १३ गतेसम्म रोट महोत्सवको आयोजना हुँदैछ। गोरखाको ऐतिहासिक स्थान गोरखगुफामा सम्पन्न हुने रोट महोत्सवको बेग्लै महत्ता र विशेषता रहेको छ।

रोट अर्पण भूमि अर्पण हो। साङ्केतिकरूपमा रोटलाई नै भूमिको रूपमा अर्पण गरिन्छ। विशेष गरी विषम परिस्थिति सृजना हुँदा त्यसको निदानका लागि, दैवी प्रकोप, राजनैतिक अस्थिरताजस्ता विपत्ति निवारणका लागि, जनकल्याण, आत्मकल्याण, इच्छित वस्तुको प्राप्ति, भक्ति, शक्ति वृद्धिका लागि श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा रोट चढाउने परम्परा रहिआएको पाइन्छ। पहिलेपहिले जसले जे का लागि, जुन अभिष्ट पूर्तिका लागि गुरु गोरखनाथको चरणकमलमा रोट चढाए पनि सिद्धाश्रम शक्ति केन्द्रले भने विशेष गरेर राष्ट्रोत्थान र जनकल्याण अनि शान्तिका लागि नै यस महोत्सवलाई प्रत्येक वर्ष सम्पन्न गर्दै आइरहेको छ।

नेपालको भौगोलिक अवस्थिति, यसको बनौट, यहाँको रीतिरिवाज, संस्कृति, परम्परा विलक्षण छ, अद्वितीय छ। गुरु गोरखनाथलाई प्रत्येक धर्म, सम्प्रदायले विभिन्न स्वरूपमा मानिआएको सन्दर्भमा आफ्ना परम्परा र संस्कृतिभित्रै बसेर पनि सबैले गुरु गोरखनाथलाई स्थान दिएका छन्। के हिन्दु, के मुस्लिम, के इसाई, के बुद्धिष्ट सबैले उहाँलाई विभिन्न रूपमा स्वीकारी मान्दै आइरहेका छन् र उहाँको कृपा, आशीर्वाद, अनुकम्पाले आफ्ना मनोरथहरू पूरा गरिरहेका छन्। नेपालको ऐतिहासिक जिल्ला गोरखाकै कुरा गर्ने हो भने पनि पृथ्वीनारायण शाहले गुरु गोरखनाथकै कृपा, आशीर्वाद पाएर नेपाल राष्ट्रको एकीकरण गर्न सफल भएको प्रसंग आउँछ। पृथ्वीनारायाण शाहले मात्रै होइन, उनका कैयौं पुस्ताअघिदेखि नै गुरु गोरखनाथको भक्ति गाउने प्रचलन रहिआएको र यसै भक्तिभावले गर्दा नै पृथ्वीनारायण शाहका पूर्खा र अग्रजहरूले आफ्नो मात्रै होइन, राष्ट्रकै

कल्याण गरेको इतिहास हाम्रो सामु छ । शान्तिमा होस् वा अशान्तिमा, प्रियमा होस् वा अप्रिय अवस्थामा, सफलतामा होस् वा असफलतामा उहाँकै यशोगान र भक्तिगान गाइएको इतिहास पनि हाम्रो सामु लुकेको छैन । युद्धभूमिमा 'जय गोरख, जय काली'को शंखघोष गर्दै गुरु गोरखनाथकै भक्ति, यशोगान गाइएबाट नेपाल राष्ट्र अहिलेसम्म विश्वसामु एउटा स्वतन्त्र राष्ट्रको रूपमा रहिरहन सफल छ, यसमा सबैले गर्व गर्छन् र गर्नुपर्छ । गुरु गोरखनाथ नै ती आराध्यदेव हुनुहुन्छ जसले विभिन्न स्वरूपमा रहेर आज पनि नेपालको रक्षा गरिरहनुभएको छ भन्ने कुरामा पनि हामीले निर्धक्क हुन सकिन्छ ।

नेपाल इतिहासको विभिन्न कठीन कालखण्डहरू चाहे त्यो नरेन्द्रदेवको पालामा होस् वा विखण्डित नेपालको एकीकरणमा होस् वा नेपाल अंग्रेज युद्धमा होस् श्री श्री महोयोगी गुरु गोरखनाथको कृपा, आशीर्वाद प्रत्यक्षरूपमा परेको र देशका कठीन परिस्थितिहरू पनि सहज र सरलताका साथ साम्य भएको कुराको प्रमाण आज पनि नेपालको इतिहासमा पाउन सकिन्छ । टुक्राटुक्रामा फुटेको नेपाल एउटै भएपछि थुप्रै उतारचढाव देखापरे । बाह्य हस्तक्षेपहरूका अतिरिक्त अनेकौं आन्तरिक खिचातानी, कलह, वैमनस्यताले गर्दा देशको स्थिति लथालिङ्गजस्तै छ । विभिन्न वाद र सम्प्रदायर दलको नाममा आ-आफ्ना डम्फू बज्दा देश विकराल स्थितितिर, कलहतिर होमिन गइरहेको आभाष सर्वत्र भइरहेको छ । भाइ फुटे गवार लुटेको दृश्यले सबै अत्तालिएका छन्, विभिन्न राजनैतिक पार्टीहरूको आ-आफ्नै अडान, स्वार्थबाट देशको पतनको बाटो रोजेजस्तै भइसकेको छ । कहिले आत्मस्वाभिमानको निहुमा कलह, कहिले प्रान्तीय राज्यको नाउमा विद्रोह त कहिले धर्मको नाउमा अशान्ति मच्चाउनेहरूको बिगबिगी बढिरहेको सन्दर्भमा को राष्ट्रसेवक चुप लागेर बस्न सक्लान्, कसको आङ सिरिङ्ग नहोला ?

त्यसैले सिद्धाश्रम शक्ति केन्द्रले राष्ट्रको गौरव जोगाउन, राष्ट्र बचाउन, यहाँको धर्म, संस्कृतिको रक्षा गर्न, यहाँका मठ-मन्दिरहरूको संरक्षण गर्न, विभिन्न सम्प्रदायहरूको अस्तित्व रक्षाका लागि आफ्नो दायित्वबोधलाई नबिर्सी गुरु गोरखनाथको श्रीचरणकमलमा वर्षेनी सवालाख रोट अर्पण गर्दै आइरहेको छ । आफ्नो दायित्वलाई निभाउन संस्थाले देशमा अमनचयन कायम राख्न, देशको अस्तित्वलाई जोगाइराख्न र विदेशी हस्तक्षेपको भयबाट मुलुकलाई बचाउन सबैभन्दा प्रभावकारी अस्त्रको रूपमा गुरु गोरखनाथको चरणकमलमा रोट अर्पण गर्नुलाई लिएको छ । यो अस्त्र विगतमा धेरै प्रभावकारी भएको तात्कालिक अवस्थाहरूमा आएको परिवर्तनले प्रमाणित गर्दछ । यस क्रमलाई निरन्तरता दिने अभियानमा संस्थाले आठौं रोट महोत्सवलाई बडो हर्षोल्लास र भव्यताका साथ मनाउन गइरहेको छ । त्यसैले हामी तपाईंहरू सबैलाई आह्वान गर्छौं– जेठ ३ देखि १३ गतेसम्म ऐतिहासिक जिल्ला गोरखाको गोरखगुफा जाऔं र गुरु गोरखनाथको चरणकमलमा अर्पण गरिने सवालाख रोट महोत्सवमा भाग लिएर यसलाई सफल बनाऔं, देशको भविष्य निर्माण गरौं ।

***रोट 'महाप्रसाद' हो । सद्गुरुदेवको चरणकमलमा अर्पित रोट खान पाउनु मानवजीवनको उच्च सौभाग्य हो । जसले रोट प्रसाद ग्रहण गर्दछ त्यो आत्मा नै धन्य हुन्छ । त्यो आत्माका युगयुगान्तरका पाप कर्महरू, दोषहरू नाश हुन्छन् र एउटा जीवले मुक्ति प्राप्त गर्नका लागि सजग मार्ग निर्माण हुन्छ । तसर्थ महाप्रसाद रोट ग्रहण गर्नाले हुने शारीरिक, मानसिक र आध्यात्मिक फाइदाहरू अनिर्वचनीय छन् । विभिन्न थरिका मसला र जडीबुटी मिसाएर बनाइने हुनाले पनि रोटको विशेष महत्त्व हुन्छ । काजु, किसमिस, छोहरा, नरिवल, ल्वाङ, सुकुमेल आदि फलादि औषधीय गुणले युक्त छन् । यी वस्तुहरुलाई विभिन्न आयुर्वेदिक खुराकहरुमा पनि मिसाइएको पाइन्छ । यिनीहरुका औषधीय गुणहरुका बारेमा धेरै पढ्न सुन्न पाइन्छ । हामीले घरेलु औषधिको रुपमा पनि यिनीहरुलाई लिँदै आइरहेका छौं । यिनै जडीबुटीहरुलगायतको मिश्रणबाट शुद्ध घिउमा तयार हुने रोटको विशेषतालाई शब्दमा भने व्यक्त गर्न सकिन्न । सेवन गरेर नै यसको महत्त्वलाई बुझ्न सकिन्छ । त्यसैले यस महाप्रसादको सेवनका लागि पनि जेठ ३ देखि १३ गतेको समयलाई सदुपयोग गर्न सकिन्छ ।***

# यात्रा जोधपुरको श्रद्धासुमन माताप्रतिको

पूजनीय गुरुमाताको तस्विरअगाडि बसेर पूजा गर्नुको बेग्लै आनन्द र अनुभूति हुन्छ । प्राय: हामीले यसरी नै पूजाआजा गर्दै आइरहेका पनि छौं । तर माताजी स्वयंलाई आफ्नोअगाडि विराजमान गराई उहाँको चरणको पूजा गर्नु दुर्लभ छ, यस्तो पूजाको आनन्द र सौभाग्यको वर्णन पनि सम्भव हुँदैन । यस्तै असम्भव र ऐतिहासिक पूजन गर्ने सौभाग्य पायो सिद्धाश्रम शक्ति केन्द्रले ।

सिद्धाश्रम शक्ति केन्द्रका केही गुरु सेवकसेविका कार्यकर्ताहरूको एउटा समूहले होलि पूर्णिमाको अवसरमा भारतको राजस्थान प्रान्तमा रहेको गुरुधाम जोधपुर भ्रमणमा जाने अवसर पाएको थियो । माताजी स्वयंको निमन्त्रणामा भएको उक्त भ्रमणको अवसरमा पूजनीय माता भगवती देवी श्रीमालीज्यूको समुपस्थितिमा उहाँको श्रीचरणकमलको पूजन गर्ने सौभाग्य आश्रमको प्रतिनिधित्व गरी भ्रमणमा सहभागी सबै गुरु सेवकसेविका कार्यकर्ताहरूले पाएका थिए ।

गत चैत्र ३० गते आश्रमका केही गुरु सेवकसेविकाहरू सम्मिलित एउटा समूह जोधपुरका लागि प्रस्थान गरेका थियौं । आश्रमको तर्फबाट गुरुधाम जोधपुर जाने हामी २२ जना थियौं । बेलुकी करिब ६:०० बजेतिर काठमाडौंबाट नेपालगञ्जका लागि बसमा प्रस्थान गर्‍यौं । नेपालगञ्जमा पुगेर बसलाई एउटा सरकारी कार्यालयमा राखेर त्यहाँ स्थित प्रसिद्ध बागेश्वरी मन्दिरको दर्शन गर्न गयौं । नेपाली एक रूपैंयाको सिक्कामा स्थान पाएको उक्त मन्दिरको भव्यता, दिव्यता देखेर हामी हृदयदेखि नै आनन्दित भयौं । खाना खाइवरी केही विश्राम गरेपछि त्यहाँबाट भारतको सीमासम्म दुइटा टाँगा लिएर गयौं । सीमानामा पुगेपछि दुइटा टाटा सुमोलाई रिजर्भ गरी लखनउसम्म गइयो । ट्रेन राति १२:३० मा प्रस्थान गर्ने हुनाले हामी केही घण्टा त्यहाँको विश्रामस्थलमा गएर बस्यौं । ट्रेन हिँडेपछि नागपुर, आग्रा, जयपुर हुँदै जोधपुर पुग्यौं । परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज मानवदेह धारण गरी धर्तीमा अवतरित हुनुभएको पावनभूमि जोधपुर पुगेपछि मनमा अर्कै तरङ्ग चल्न थाल्यो, आनन्दको लहर उठ्न थाल्यो । हामी सबैले आफूलाई परम सौभाग्यशाली ठान्यौं । धन्यधन्य ठान्यौं ।

स्टेशनबाट केही पर आएर कोही थकाइ मार्न बस्यौं, कोही चियानास्ताको व्यवस्था गर्नतिर लाग्यौं । बासको

व्यवस्था गर्ने कार्यमा पनि कोही लागे । गुरुधामबाट ४-५ किमि टाढा भए पनि राजस्थानी शैलीको लजमा बास बस्ने व्यवस्था मिलाइयो । नुवाइधुवाइ सकेर केही बेर विश्राम गरेपछि भोलि माताजीहरूको दर्शनका लागि जाने निधो भयो ।

चैत्र २ गते माताजीको दर्शनका लागि अटोरिक्सामा प्रस्थान गर्‍यौँ । त्यहाँ माताजी तुलसी, पिपलको पूजाका लागि निस्कनै लाग्नुभएको थियो । केही बेरमा माताजी बाहिर निस्कनुभयो । साक्षात् जगदम्बाले आफू अनजान बनेर पूजन गर्नुभएको दृश्यले हामीलाई जिज्ञासु बनायो । यो देखेर हामी आनन्दित भयौँ । केही समयपछि माताजीले पूजा सिध्याउनुभयो । हामीले पालैपालो उहाँको दर्शन गरेर धन्यधन्य हुने अवसर पायौँ ।

माताजीको दर्शनपछि हामी लुनीस्थित सद्‌गुरुदेवले स्थापना गरिदिनुभएको लक्ष्मीनारायणको मन्दिर पुग्यौँ । अति नै भव्य उक्त मन्दिर सद्‌गुरुदेवले आफ्नै घर रहेको स्थानमा बनाउनुभएको थियो । लुनीका अन्य दर्शनीय कुराहरूलाई हृदयकमलमा स्थान दिएर हामी त्यहाँबाट केही दूरीमा रहेको मेहरानगढ दरबार गयौँ । सो दरबार अति नै विहंगम, विशाल र विराट् रहेछ भन्ने कुरा यसलाई देखेपछि मात्रै थाहा भयो । यसको सुन्दरतालाई पिउँदै यसभित्र रहेका राजसी सामग्रीहरूलाई नियाल्यौँ । २, ३ सय वर्ष पुराना र पहिलेका राजामहाराजाहरूले प्रयोग गर्ने पालकी, खात, टेबुल, भाला, तरबार, चित्रहरूको सुन्दरता त अति आकर्षक एवं भव्य थियो । ती सामग्रीहरूको संरक्षण अहिलेसम्म हुन सकेकाले धेरै व्यक्तिहरू यसको अवलोकन गरेर आनन्दित हुन पाइरहेका छन् । त्यहाँबाट हामी लजमै फर्क्यौँ । राति करिब ८:३० तिर पूज्य गुरुदेव अरविन्दज्यूको दर्शनका लागि पुन: गुरुधाम आइपुग्यौँ । गुरुदेवले समय दिनुभयो । हामीले क्रमैसित उहाँको चरण स्पर्श गर्‍यौँ । त्यतिबेला उहाँले नेपालमा हालसालै सम्पन्न शिविरको प्रशंसा गर्नुका साथै गोरखामा सम्पन्न हुने आठौँ रोट महोत्सवको बारेमा जिज्ञासा राख्नुभयो । अरविन्द गुरुदेवको साथमा अनुकुल भएसम्म पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यू पनि ऐतिहासिक जिल्ला गोरखामा आठौँ रोट महोत्सवको पुनीत अवसरमा आउनुहुने पक्कापक्कीले हामीभित्र फेरि आनन्दको तरङ्ग उर्लियो । हामी दङ्गदास थियौँ किनकि सिद्धाश्रम शक्ति केन्द्रले एकपछि अर्को ऐतिहासिक कार्यक्रमहरू सम्पन्न गर्ने अवसर पाइरहेको छ, यसै अवसरमा अर्को अवसरको

जोधपुरस्थित माताजीको निवास

सृजना भएकोमा हामी परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको चरणकमलमा कृतकृत छौँ, उहाँको कृपा, अनुकम्पाप्रति नतमस्तक छौँ ।

चैत्र ४ गते बिहान करिब १०:०० बजेतिर **साक्षात् जगत्जननी पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको चरणपूजन गर्ने सौभाग्य सिद्धाश्रम शक्ति केन्द्रबाट गएका हामीले प्राप्त गऱ्यौँ । माताजीकै निवासमा सम्पन्न भएको उक्त पूजन कार्यक्रम विधि विधानअनुसार सम्पन्न भएको थियो । पूजन सिद्धाश्रम शक्ति केन्द्र नेपालबाट गएकाहरुका लागि भनेर व्यवस्था गरिएको थियो ।** पूजनपछि माताजीको चरणकमलको दर्शन गरी माताजीसँग सामूहिक तस्वीर समेत लियौँ । त्यसपश्चात् शिविरस्थलमा गयौँ ।

त्यो दिन शिविरको पहिलो दिन थियो । उद्घोषकले सिद्धाश्रम शक्ति केन्द्रको आयोजनामा हालै सम्पन्न काठमाडौँ शिविर एवं माताजीको अभिनन्दन समारोहको सन्दर्भलाई कोट्याउनुभयो । सिद्धाश्रम शक्ति केन्द्र ऐतिहासिकरूपमा शिविर सम्पन्न गर्न सफल भएको र माताजीलाई राष्ट्रियस्तरबाट सम्मान गर्नमा अहंभूमिका निभाउन सफल भएको प्रसंग सुनाउनुहुँदा शिविरस्थल तालीको गडगडाहटले भरिएको थियो । सोही दिनमा अरविन्द गुरुदेवले आशीर्वचनको क्रममा सिद्धाश्रम शक्ति केन्द्रका समस्त साधकसाधिकाहरूको उन्नति र श्रेष्ठताका लागि आशीर्वाद प्रदान गर्नुभएको थियो ।

सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट संस्थाका संयोजद्वय रामजी अर्याल र विन्देश्वरी बरालले पूजनीय गुरुमाता एवं अरविन्द गुरुदेवलाई माल्यार्पण गर्नुभएको थियो ।

शिविरको दोस्रो दिन पूजनीय माताजी र अरविन्द गुरुदेवले गोरक्ष निखिल वाणीको फाल्गुण अंक, सिद्धाश्रम शक्ति केन्द्रबाट प्रकाशित २०६८ सालको भित्तेपात्रो र काठमाडौँ शिविरको डिभिडिको विमोचन गर्नुभयो । दोस्रो दिनको शिविरमा गुरूपूजनको अवसर शक्ति केन्द्रका साधक साधिकाहरूले पनि पाएका थिए ।

शिविरभर नै सिद्धाश्रम शक्ति केन्द्रका गुरु सेवकसेविका कार्यकर्ताहरूले गुरुकार्यको सौभाग्य पाएका थिए । पूजनीय माताजी र अरविन्द गुरुदेवको सुरक्षार्थ खट्ने, सामानहरू लाने लैजाने, माला गाँस्ने, पूजा थाली माझ्नेजस्ता गुरुकार्यहरू गर्ने सौभाग्यले सिद्धाश्रम शक्ति केन्द्रका हामी गुरु सेवकसेविकाहरू धन्यधन्य भएका थियौँ । यति मात्र कहाँ हो र ? भजनहरूमा नृत्य गर्ने र अरूलाई पनि यसमा प्रेरित गरेर नचाउन सफल गुरु सेवकसेविकाहरूको जोश, जाँगर, उत्साह देखेर शिविरमा छुट्टै आकर्षण सृजना भएको थियो । यस क्रममा सिद्धाश्रम शक्ति केन्द्रका कार्यकर्ता साधक साधिकाहरूको उपस्थितिलाई त्यहाँ सहभागी सबैले पृथक्रूपमा, आकर्षणको रूपमा, प्रभावशाली रूपमा, जोशिलो रूपमा लिएका थिए ।

शिविरमा गुरुदीक्षा, साधना, विभिन्न प्रयोगलगायत शक्तिपात दीक्षा र विशेष शक्तिपात दीक्षाहरू प्रदान गरिएको थियो । होलिका दहनको रात्रिमा होलिका दहनपश्चात् पूज्य गुरुदेव अरविन्दज्यू एवं उहाँकी धर्मपत्नीले सिद्धाश्रम शक्ति केन्द्रका कार्यकर्ता साधकसाधिकाहरूसँग होली खेल्नुभएको थियो ।

यसरी होली पूर्णिमाको अवसरमा माताजीबाट आमन्त्रण गरिएको कार्यक्रममा भाग लिएर त्यहाँबाट फर्कदा हामीले आफूलाई धन्यधन्य भएको ठान्यौँ । किनकि यसबाट सिद्धाश्रम शक्ति केन्द्रलाई पुन: अन्तर्राष्ट्रियरूपमा चिनाउने थप कार्य भएको छ, अगाडि नै अन्तर्राष्ट्रिय रूप लिइसकेको संस्थालाई अझै दरिलोरूपमा उभ्याउन सफल भएको छ । यस्तो शुभ अवसर प्रदान गर्नुभएकोमा परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज, पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यू र अरविन्द गुरुदेवको श्रीचरणकमलमा भक्तिपूर्वक कोटिकोटि नमन अर्पण गर्दछौँ ।

जय गुरुदेव !

## खुशीको खबर

**पूजनीय गुरूमाताको अभिनन्दन समारोहको आकर्षक डिभीडी एवं उक्त अवसरका तस्विरहरू सहितको विक्रमसम्वत् २०६८ सालको भित्तेपात्रो प्रकाशित भइसक्यो । सामग्री प्राप्त गर्न नजिकै रहेका आश्रमहरुमा सम्पर्क गर्नुहोला ।**

**जय गुरूदेव !**

# फेरि आयो वसन्त

कोइलीहरू 'कुहु कुहु'को मधुर आवाजमा गाइरहेका थिए । तर उता यस्तो बेलामा पनि स्वामी असंगानन्दजी भने रोइरहेका थिए । रुवाइको कारण के थियो मलाई थाहा भएन । एक वयोवृद्ध संन्यासीलाई यसरी रुँदै गरेको देखेर मलाई अति नै आश्चर्य लागेको थियो । अरूले उनलाई स्वामी पंगानन्द भनेर बोलाउने गर्थे । शायदै एकदिन पनि यस्तो होला जुन दिन उनको अन्य संन्यासीहरूसित झगडा नभएको होस् । कसैले उनलाई स्वामी पसंगानन्द पनि भनेर बोलाउँथे किनकि जहाँसुकै विवाद हुन गए पनि बोलाउनै नपर्ने गरी उनी समाधान दिन आइपुग्थे ।

जीवनमा आनन्दको क्षण सृजना गर्नमा दुई स्थितिहरू हुन्छन्– हास्य एवं विनोद । हास्यको सृजना त सामान्य व्यक्तिले पनि गर्न सक्छ । तर विनोदको सृजना गर्न त संन्यासीहरू मात्रै सिपालु हुन्छन् । यस रूपमा उनीहरू आफ्नो जीवनलाई अधिक आनन्दयुक्त बनाउँदै गतिशील रहन्छन् ।

स्वामी असंगानन्दजी पनि यसका अपवाद थिएनन् । तर त्यसदिन उनी कुनै विवाद गर्न लागिरहेको जस्तो देखिँदैनथे । उनको भावभंगिमाबाट पनि यस्तो लाग्दैन थियो । उनको अर्धश्वेत जटा खुलेर बाहिरिएको थियो र अश्रुप्रवाह उनको श्वेतश्याम जटालाई भिजाउँदै भुइँमा झरिरहेको थियो ।

ठूलो जिउका धनी असंगानन्दजी अकास्मात बसे । उनी बस्दा भूमि धसियो र उनका आँखा शून्यमा स्थिर भए । उनको रोदन त रोकिइसकेको थियो । जसरी बालक रुँदारुँदै थाकेपछि अन्तमा हिच्की भर्दै बस्छन्, उनको पनि त्यस्तो रूप देखियो । मैले उनको यस्तो रूप पहिले देखेको थिइन ।

उनले सोधे– के भयो ?

म त केवल यसै क्षणको प्रतीक्षामा थिएँ । प्रत्युत्तरमा मैले सोधेँ– यही म तपाईंसित जान्न चाहन्थेँ ।

स्वामीजी तबसम्म प्रकृतिस्थ भइसकेका थिए । उनले स्वरलाई संयमित गर्दै भने– यस्तै हुन्छ । गुरुको आउने र जाने क्रममा यसरी नै रुवाउने हुन्छ ।

मैले सहज भावमा भनेँ– के गुरुदेव आउनुभएको थियो ? कहाँ बस्नुभएको थियो ? म पनि उहाँसँग भेट्न चाहन्छु ।

मेरो प्रश्न सुनेर उनी पहिले जस्तै चिच्याए– सुनेनौ तिमीले कोइलीहरू गाइरहेका थिए ।

त के ती कोइलीहरूको रूपमा गुरुदेव हुनुहुन्थ्यो ?

मेरो यस्तो प्रश्न गराइ र प्रत्युत्तरको

रूपमा स्वामीजीले दण्डा फ्याँकेर आक्रमण गर्नु दुवै एकैपटक भयो । संन्यासजीवनमा यस्तो कुरालाई कुनै विशेष घटना मानिन्न । तर मेरो प्रश्न त अधूरै रहन गयो ।

कस्तो वज्रमूर्ख पठाउनुभयो गुरुदेव हजुरले म कहाँ ! हजुरसित बसेको छु भन्छ तर गुरुजी कोइली बनेर आउनुभएको थियो भनेर पो सोधिरहेको छ । यसलाई यति पनि थाहा छैन कि जब हजुर आउनुहुन्छ तब सम्पूर्ण प्रकृतिमा बसन्त छाउँछ । कसैले बुझोस् वा नबुझोस्, कोइलीहरू त केही बुझेर गाउन लाग्छन् । यसले भन्दा त पशुपंक्षीले बुझ्छ ।

उनी मलाई केही सुनाउन खोजिरहेका थिए । स्पष्ट त भइरहेको थिएन । तर केही बुझेजस्तो भने लागिरहेको थियो । कतै गुरुदेवले आफ्ना शिष्यलाई भन्नुभएको थियो कि गुरुको आशीर्वाद फलदायक हुन्छ नै, उहाँको श्राप पनि फलदायक बन्न जान्छ । स्वामीजीलाई दण्ड फ्याँकेर मलाई हिर्काएकोले केही क्षोभ त भइरहेको थियो । तर उनी सहजरूपमा मसित कुरा गर्ने चेष्टा गरिरहेका थिए ।

म केही दिन स्थान परिवर्तन गर्ने एवं पूज्यपाद गुरुदेवसित अनुमति लिएर उत्तराखण्डको त्यस पावन भूमिमा गएको थिएँ जुन सदा मलाई अतिशय प्रिय लाग्छ ।

जाने बेलामा गुरुदेवले मलाई आफ्ना एक संन्यासी शिष्यको ठेगाना दिएर उसैको सान्निध्यमा बस्नू भन्नुभएको थियो । म यसरी स्वामी असंगानन्दजीको सान्निध्यमा पुगेको थिएँ । यसबीच न त गुरुदेवले मलाई कुनै साधना सम्पन्न गर्ने निर्देशन दिनुभयो, न मैले नै कुनै साधनालाई सम्पन्न गर्ने विचार गरेँ किनकि प्रकृतिको सान्निध्यमा रहनु स्वयंमा कुनै साधनाभन्दा कम थिएन । यो मेरो दृढ विश्वास हो ।

संन्यासजीवनमा अरू कुनै विशेषता होस् वा नहोस् एउटा कुरा त मलाई अति धेरै सुखद प्रतीत भएको छ कि त्यस जीवनमा न त कुनै प्रवंचनाका लागि स्थान हुन्छ, न त यस समाजको जस्तै कुनै झूठो औपचारिकता नै । जे हुन्छ त्यो स्पष्ट हुन्छ । स्वामीजीले पनि यसै भावमा जे भन्न लागिरहनु भएको थियो त्यसमा कुनै सन्दर्भ थिएन । तर मेरो लागि त त्यो सन्दर्भयुक्त थियो ।

'गंगाको किनारामा बसेर गंगाको महत्त्व बुझ्न सकिन्न', गुरुदेवले बताउनुभएको छ । होइन भने यति विराट सत्ताको सहचर्यमा रहेर यति मूर्खतापूर्ण कुरा कसरी कसैले गर्न सक्थ्यो ?

योगी एवं विशेष गरेर संन्यासीहरू जुन शैलीमा कुरा गर्छन् त्यो एकप्रकारले आत्मालापको शैली हुन्छ, अर्थात् बोल्नेलाई यसको बोध नै हुँदैन कि उसले के बोलिरहेको छ, किन बोलिरहेको छ ।

त्यसलाई कसैले सुनिरहेको छ कि छैन, यस चिन्ताबाट पनि ऊ मुक्त हुन्छ । यस कुराको मलाई ज्ञान थियो र मैले यो पनि जान्दछु कि यस्तो क्षणमा जे प्राप्त हुन्छ, त्यो वास्तवमा उनै गुरुद्वारा नि:सृत ज्ञानामृतका थोपा हुन् जसलाई सहस्त्र पादाक्षि शिरोरुबाहवे अर्थात् सहस्र पाउ र सहस्र बाहु भएको मानेर प्रणाम गरिन्छ ।

तिमीले उहाँलाई एक सामान्य गुरु वा अधिकभन्दा अधिक एक प्रकाण्ड ज्योतिषी र तन्त्र-मन्त्रवेत्ता मात्र सम्झेका छौ भन्ने मलाई लागिरहेको छ । अरे ! उहाँ त अखिलरूपमा व्याप्त भएर पनि निखिल हुनुहुन्छ र परम प्रसन्न पनि । तब त उहाँलाई हामी परमहंस स्वामी श्री निखिलेश्वरानन्द भनेर भन्छौं ।

पुछारको वाक्यलाई नाटकीयरूपमा बताउँदै मेरो पीठमा धाप मारेर स्वामीजी खित्का छोडेर हाँस्न थाले । सम्पूर्ण वातावरण पनि एकाएक रमाइलो हुन गयो । संन्यासीहरूको जीवन वा मानसमा अन्य कुनै हुँदैन । उनीहरूको हास्यविनोद, क्रोध, प्रेम सबै आधारित हुन्छन् आफ्ना गुरुमाथि । स्वामीजी पनि यसका अपवाद थिएनन् ।

वातावरण स्निग्धता र आत्मीयताले परिपूर्ण भएको थियो । यही अवसरमा मेरो मनमा तत्काल आफ्नो प्रश्नको समाधान स्वामीजीबाट गराउने विचार उठ्यो । कोइलीले गाएको तात्पर्य त मैले बुझिसकेको थिएँ कि केही समय पहिले अवश्यै परमपूज्य गुरुदेव सूक्ष्मरूपमा उपस्थित हुनुभएको थियो । तर अखिल र निखिल शब्दको भेद भने मैले जान्न सकेको थिइन ।

मैले यस दृष्टिकोणले परमपूज्य गुरुदेवलाई सोचेकै थिइन । उहाँको यस नामको पछाडि जे रहस्य छ त्यो यति मात्रै हो कि उहाँ समस्त चराचर प्रकृतिलाई स्वयंमा समाहित

*ॐ नमः निखिलेश्वर्यायै कल्याण्यै ते नमो नमः ।*
*नमस्ते रुद्र रूपिण्यै ब्रह्म मूर्त्यै नमो नमः ॥१॥*
*नमस्ते क्लेश हारिण्यै मंगलायै नमो नमः ।*
*हरति सर्व व्याधिनां श्रेष्ठ ऋष्यै नमो नमः ॥२॥*
*शिष्यत्व विष नाशिन्यै पूर्णतायै नमोस्तुते ।*
*त्रिविध ताप संहर्त्यै ज्ञान दात्र्यै नमो नमः ॥३॥*
*शांति सौभाग्य कारिण्यै शुद्ध मूर्त्यै नमोस्तुते ।*
*क्षमावत्यै सुधावत्यै तेज वत्यै नमो नमः ॥४॥*
*नमस्ते मंत्र रूपिण्यै तंत्र रूप्यै नमोस्तुते ।*
*ज्योतिषं ज्ञान वैराग्यं पूर्ण दिव्यै नमो नमः ॥५॥*
*य इदं पठतिं स्तोत्रं श्रृणुयाद् श्रुद्धयान्वितं ।*
*सर्व पाप विमुच्यन्ते सिद्धयोगिश्च संभवे ॥१॥*
*रागस्थो रोग तं मुच्येत् विपदा त्राणया दपि ।*
*सर्व सिद्धि भवेदस्य दिव्य देह श्च संभवे ॥२॥*
*निखिलेश्वर्य पंचकं य नित्यं यो पठते नरः ।*
*सर्वान् कामान मवाप्नोति सिद्धाश्रमो च वाप्नुयात् ॥३॥*

*–किंकर स्वामी*

गरेर गतिशील भइरहनु भएका हाम्रा पूज्य र प्रिय गुरुदेव हुनुहुन्छ भन्ने सामान्य धारणा मात्रै थियो मेरो ।

जीवनको कुनै पनि कला किन नहोओस् प्रत्येकको अभिव्यक्ति उहाँद्वारा यस रूपमा सम्भव हुन्थ्यो भन्ने लाग्न लागेको थियो । उहाँ केवल यसै कलामा मात्रै पूर्णरूपमा निष्णात हुनुहुन्छ भन्ने लागे पनि केही बेरपछि नै उहाँ अन्य भावमा आरुढ भएर यसरी आउनुहुन्थ्यो कि उहाँको पूर्वरूप विस्मृत हुन जान्थ्यो र जे जति भर्खरै देखिएको थियो, त्यो एउटा सपना थियो जस्तो लाग्थ्यो । यसैले त आजसम्म उहाँको साथमा व्यतीत भएका एक एक क्षण कुनै स्वप्निल जगतमा व्यतीत भएका क्षण लाग्दछन् ।

... म स्मृतिहरूमा लीन भइरहेको थिएँ । एकाएक अलकनन्दामाथि खसेको कुनै गह्रुँगो चट्टानको आवाजले मलाई सचेत पार्‍यो । मैले पुनः सचेत भएर सोच्न लागेँ कि अवश्यै कुनै गूढ भेद छ गुरुदेवको यस विशेषणको पछाडि किनकि संन्यस्तजीवनमा शिष्यलाई जुन नाम आफ्ना गुरुबाट प्राप्त हुन्छ, त्यो नाम नभएर एक विशेषण हुन्छ ।

म यस गहन विवेचनामा हराइरहेको थिएँ कि यदि पूज्यपाद गुरुदेवलाई यस्तो विशेषण आफ्ना गुरुदेव दादा गुरुदेव स्वामी सच्चिदानन्दज्यूद्वारा प्राप्त भएको हो भने त्यो अकस्मात हुन सक्दैन । दादा गुरुदेवले उहाँलाई अखिलानन्दको नाम पनि त दिन सक्नुहुन्थ्यो ।

दुवै पदको भाव स्वयंमा समाहित गर्न र सबैबीच स्वयंलाई विस्तारित गर्नुमा नै निहित छ भन्ने कमसेकम म अल्पज्ञ शिष्यले यति त बुझ्दछु । व्याकरणका आचार्य यस विषयमा के भन्दछन्, यो न त मलाई न त मजस्ता अनेकौं शिष्यलाई नै थाहा होला ।

मेरा आँखा सामु परमपूज्य सद्गुरुदेवको विम्ब आफ्नो सम्पूर्ण हास्यका साथ उपस्थित थियो मानौं उहाँ मेरो यस अप्ठ्यारोको आनन्द लिइरहनुभएको छ । यत्तिमा मात्रै

उहाँको कौतुहलता पूरा नभएको हुनाले उहाँले स्वामी असंगानन्दजीलाई पनि मन्दमन्द मुस्काराउनका लागि प्रेरित गरिरहनुभएको थियो ।

अखिलानन्द र निखिलेश्वरानन्द ? आफ्ना समस्त ज्ञान र विज्ञानलाई लगाउँदै पनि म पराजित भएँ । मैले पराजय स्वीकार गरेको भावमा स्वामीजीतिर हेरेँ, उनले सहज भावमा भने– अरे भाइ ! जो एक पलमा सबै ठाउँमा समाउनुभएको छ त्यो अखिल हो र समाएर पनि नसमाउनु भएको छ, उन्मुक्त छ त्यो निखिल हुनुहुन्छ । जस्तै यो उन्मुक्त आकाश ! सम्पूर्ण ब्रह्माण्ड यसैमा समाएको छ तर यो त कसैमा समाएको छैन ।

उनको स्वरमा लुकेको शिशुत्व र ममत्वलाई अनुभव गरेर म अन्तर्मनदेखि मुस्कुराएँ ।

शास्त्रमा यसै स्थितिलाई ब्रह्मविद्-वरिष्ठ अवस्थाको रूपमा वर्णित गरेको पाइन्छ । यसैलाई साधनाको सर्वोच्च सोपान मानिएको छ । सामान्यतया साधक जुन ब्रह्मतत्त्वलाई प्राप्त गरेर त्यसको आनन्दमा आत्मलीन हुन जान्छन्, जगतको कर्तव्यबाट अलि विमुखजस्तै हुन्छन् तब यस्तो सर्वोच्च सोपानमा उभिएका साधक, जस्तो परमपूज्य गुरुदेव, आफ्नो आत्मलीनताको सुखलाई त्यागेर एक प्रकारले केवल विष पिउनका लागि यस धरतीमा अवतरित हुनुहुन्छ ।

शिष्यले गुरुलाई के नै दिन सक्छ र ? शिष्य त स्वयं नै गुरुसामु याचक हुन्छ । उसले गुरुको धन लुट्न नखोजे पनि उहाँको प्रताप त लुट्न खोजेकै हुन्छ । उसले गुरुको वर्चस्व लुट्न नखोजे पनि उहाँको ज्ञानलाई अवश्यै लुट्न खोजेको हुन्छ । गुरु पनि अज्ञानी बनेर आफूलाई लुटाउँदै बस्नुहुन्छ किनकि उहाँ निखिल हुनुहुन्छ !

सबैमा रम्दै पनि उहाँको चित्त रमाएको छैन आफ्ना शिष्यहरूका अतिरिक्त अन्य भावभूमिमा । आफ्ना शिष्यहरूको कुनै कुरामा पनि उहाँलाई केही स्पृहा छैन । उहाँको नामको प्रचार गर अथवा उहाँको नामलाई फैलाऊ भनेर उहाँले हामीमाथि दायित्व थोपर्नुभएको छैन । तर गुरुदेवले जुन कुराको सधैँ स्पृहा गर्नुभयो त्यो यति मात्रै हो कि उहाँका शिष्य विषादयुक्त नरहोस्, उहाँसँग कुनै पनि रूपमा छल नगरोस् । यही उहाँको साधना, उपासना, आराधना वा जे संज्ञा दिए पनि सबैको सर्वोच्च रूप हो । यस्तो गर्नाले नै जीवनमा त्यो वसन्त स्थायी हुन सक्छ जुन वसन्त स्वयंमा कुनै विलास नभएर नित्य नवसृजनाका प्रतीक परमहंस स्वामी श्री निखिलेश्वरानन्दज्यूको नै दोस्रो रूप हो ।

जय गुरुदेव !

# परमपुज्य सद्गुरुदेवको गृहस्थजीवन

गुरुदेवले आफ्नो जीवनलाई, जीवनको प्रत्येक पललाई सम्पूर्ण रुपमा समाजकल्याणको लागि नै समर्पित गर्नुभएको थियो। तथापि उहाँको गृहस्थजीवन सफल थियो। उहाँ निरन्तर रुपमा आफ्नो कार्य र लक्ष्यप्रति गतिशील हुनुहुन्थ्यो तर पनि शास्त्रहरुमा वर्णित गृहस्थ धर्मसम्बन्धी कुनै पनि कार्य गर्न, गराउन उहाँ पछि पर्नु भएन।

प्राय: साधुसन्त, धर्मगुरुहरुको भेषभूषा अलग्गै हुने गर्दछ। गेरुवा वस्त्र धारण, त्यसै किसिमको कपाल वा जटा, निधारमा रातो टिका वा चन्दन, केसर लेपनको साथमा पनि धर्मगुरुहरु देखिने गर्छन्, तर गुरुदेवको व्यक्तित्व, पहिरन अन्य धर्मगुरुहरुको भन्दा एकदमै पृथक् थियो। यसको मुख्य कारण यही नै हो कि उहाँले आफूलाई धर्मगुरु, सन्त, स्वामीभन्दा एक साधारण गृहस्थको रुपमा परिचित गराउन रुचाउनुभयो। सेतो कुर्ता र सेतो धोतीको पहिरनमा उहाँले आफ्नो आकाशभन्दा विशाल र सागरभन्दा गहिरो व्यक्तित्वलाई लुकाउनुभयो। उहाँलाई नदेखेका व्यक्तिहरु उहाँको कुरा सुनेर उहाँको जस्तो स्वरुपको परिकल्पना गरेर उहाँ कहाँ जान्थे, उहाँलाई देखेपछि चकित पर्दथे।

गुरुदेव चौबीस वर्षको हुँदा उहाँको पिताको देहान्त भयो भने आमाको साथ लामो समयसम्म रहनुभयो। उहाँले आफ्ना माता-पिताप्रतिको कुनै पनि कर्तव्य गर्न बाँकी राख्नुभएन। पूजनीय गुरुमाता भगवती देवीसँग उहाँको गृहस्थजीवन अति नै सफल रह्यो। जीवनको हरेक सुखदु:खमा साथ दिने र सधैं उहाँलाई उहाँको लक्ष्यतर्फ प्रेरित गर्ने धर्मपत्नी पाउनु भएको कुरामा गुरुदेवले सदा गौरव महसुस गर्नुभयो। उहाँबाट ६ सन्तानको जन्म भयो।

उहाँका जेष्ठ सुपुत्र पन्नालाल (भमरलाल) को जन्म सन् १९५० मा भएको थियो। सुपुत्र नन्दकिशोरको जन्म सन् १९५५.१२.१६. मा भयो। सुपुत्र कैलाशचन्द्रको जन्म सन् १९५८.१.१८ मा भयो। सुपुत्री सरोजको जन्म सन् १९६१.१.३० मा भयो। सुपुत्र अरविन्दको जन्म सन् १९६७.७.४ मा भयो। सुपुत्री निर्मलाको जन्म सन् १९६९.९.८ मा भयो।

यी चार पुत्र र दुई पुत्रीले गुरुदेवजस्तो व्यक्तित्वबाट जन्म लिने अहोभाग्य प्राप्त गर्नुभयो। उहाँहरुको लालनपालन त्यस समयको राजस्थानी प्रचलनअनुसार सामान्य रुपमा भयो। शुरुमा आर्थिक स्थिति कमजोर भएको र गुरुदेव प्राय: जंगल र हिमालयतिर गइरहनु हुने भएकोले माताजीले गरीबीको अवस्थामा बच्चाहरुलाई सम्हाल्नुभयो। पछि पछि गुरुदेवको सफलतासँगै घरमा सम्पन्नता बढ्दै गयो र छोराछोरीहरुको लालनपालन र शिक्षा दीक्षा राम्रोसँग हुन थाल्यो।

अति व्यस्तताको कारणले छोराछोरीहरुको गुरुदेवसँग सधैं नै एक किसिमको दूरी कायम रह्यो। यस सन्दर्भमा उहाँकी बहिनी सावित्री श्रीमाली भन्नुहुन्छ– "हामी तीनैजना (गुरुदेव, भाइ राधाकृष्ण श्रीमाली र बहिनी सावित्री श्रीमाली) को घर पहिले हाइकोर्ट कोलनीमा सँगसँगैजस्तो थियो। हाम्रा सबै बालबच्चाहरु सँगसँगै खेल्दथे, खान्थे, बसउठ गर्दथे। दाइ (गुरुदेव) का बच्चाहरु उहाँसँग नजिक थिएनन्। उनीहरु आफ्नो पितासँग केही कुरा राख्नुपरेमा आमाको माध्यमबाट राख्दथे। सानो दाइ र मैले उहाँहरुलाई भाइसाहब, भावी भन्ने गरेकोले छोराछोरीहरुले पनि उहाँलाई भाइसाहब, भावी नै भन्दथे। पछि गएर गुरुजी भन्न थाले।"

जेष्ठ सुपुत्र भमरलाल भने अल्पायुको हुनुहुँदो रहेछ। २१ वर्षको उमेरमा उहाँको मृत्यु भयो। बिमारीको कारणले अस्पतालमा उहाँको मृत्यु भएको थियो। यससम्बन्धी सावित्री देवी भन्नुहुन्छ– "भमरलाल नरहने कुरा दाइलाई पहिले नै थाहा थियो। मृत्यु हुने एकदिन अघि अस्पतालमा भेट्न आएका सबै मानिसलाई उहाँले घर जान भन्नुभएको थियो। छोराको बाँच्ने समय नरहेको कुरा उहाँले त्यस समय बताउनु भएको थियो।"

सुपुत्र नन्दकिशोर र कान्छी सुपुत्री निर्मला देवीले विज्ञानको र सुपुत्र कैलाशचन्द्र र अरविन्दले व्यवस्थापन विषयमा अध्ययन गर्नुभएको छ। उचित समयमा गुरुदेवले आफ्ना सबै छोराछोरीहरुको विवाह गरेर पिताको दायित्व निभाउनु भएको छ। सुपुत्र नन्दकिशोरको विवाह बम्बईका विख्यात डाक्टर भूपेन्द्र कुमारकी बहिनी कुसुम श्रीमालीसँग, सुपुत्र कैलाशचन्द्रको विवाह महामन्दिरका श्रेष्ठ श्रीमाली बन्धु तथा लुनीकण्ठाका अध्यक्ष भएका मथुरा प्रसादजीकी सुपुत्री शोभा श्रीमालीसँग र कान्छा

सुपुत्र अरविन्द श्रीमालीको विवाह बालोतराका पृथ्वीराज व्यासकी सुपुत्री निशा श्रीमालीसँग भयो। त्यस्तै जेठी सुपुत्री सरोजको जोधपुर निवासी श्री हेमन्त श्रीमालीसँग र कान्छी सुपुत्री निर्मलाको विवाह  दिल्ली निवासी श्री विनोद कुमार शर्मासँग भयो।

गृहस्थजीवनमा गुरुदेव हरेक रुपमा आदर्श हुनुहुन्थ्यो। एक आदर्श छोरा, एक आदर्श दाइ, आदर्श पति र आदर्श पिता हुनुहुन्थ्यो। सानो ठूलो, धनी गरीब प्रत्येकप्रति उहाँ सम्मानको भाव राख्नुहुन्थ्यो। उहाँको अगाडि कसैले पनि आफूलाई सानो र कमजोर महसुस गर्दैनथ्यो। आफ्ना मामा माइज्यूहरुप्रति, सांचोरमा रहने आफ्ना ठूलाबुबा सानाबुबाको उहाँले सधैं नै सम्मान गर्नुभयो भने आफ्ना भाइबहिनीहरुको उहाँ सधैं अभिभावक बन्नुभयो। यस सन्दर्भमा सावित्री देवी भन्नुहुन्छ– "दाइजस्तो आदर्श दाइ पाउनु जीवनमा धेरै कठिन छ, उहाँ सबैलाई प्रेम र सम्मान दिनुहुन्थ्यो, मेरो जीवनको प्रत्येक समस्यामा, प्रत्येक निर्णयमा उहाँ साथ रहनुभयो। उहाँलाई प्रत्येक कुरा, प्रत्येक समस्या नबताइकन थाहा हुन्थ्यो। कुनै दिन समस्या भएको तर उहाँलाई नबताएको बेलामा उहाँ भन्नुहुन्थ्यो– 'तिमीलाई यस्तो भइरहेको छ, मलाई किन नभनेको' ? राखी (जनै पूर्णिमा) को बिहानै उहाँ म कहाँ आइपुग्नु हुन्थ्यो, उहाँ यही हुनु भएको बेला उहाँले कुनै पनि राखी छाड्नु भएन। मसँग राखी बाँधेपछि मात्र उहाँले आफ्ना छोराछोरीहरुलाई राखी बाँध्न लगाउनु हुन्थ्यो।"

हाल गुरुदेवका तीनैजना सुपुत्रहरुले पिताको मार्गलाई अवलम्बन गरिरहनु भएको छ। कान्छी सुपुत्री निर्मला हाल Delhi Public School मा अध्यापनरत हुनुहुन्छ भने जेठी सुपुत्री सरोजको २ वर्षअगाडि अर्थात् सन् २००९ मा देहान्त भयो। गुरुदेवको वंश हाल यसरी अघि बढिरहेको छ–

**सद्गुरुदेव डा. नारायण दत्त श्रीमाली तथा पूजनीय गुरुमाता भगवती देवी श्रीमाली**

*(अद्वितीय युगपुरुष : डा. नारायणदत्त श्रीमालीबाट)*

# सिद्धाश्रम शक्ति केन्द्रका लागि २०६७ साल

सिद्धाश्रम शक्ति केन्द्र (सिशके) ले आध्यात्मिक गतिविधिमार्फत् आध्यात्मिक चेतना फैलाउने र शान्तिलाई फैलाउँदै आइरहेको सर्वविदित छ। यसले दैनिक, साप्ताहिक र मासिकलगायत वार्षिक, चाडपर्व र विशेष अवसरमा विशेष कार्यक्रमहरू पनि सम्पन्न गर्दै आइरहेको छ । यसै क्रममा भर्खर हामीसित विदा भएको २०६७ सालमा आश्रममा केही परीक्षाहरू आए पनि, यसको गतिमा केही समय अवरोध आए पनि गत वर्ष सिद्धाश्रम शक्ति केन्द्रले विभिन्न गतिविधिहरू सम्पन्न गर्न सफल भएको छ । आश्रम अब बन्द हुन्छ, आश्रममा गएर अब केही फाइदा छैन भनेर कुर्लनेहरूका लागि यसले आयोजना गरेर अद्वितीय सफलता पाएको अन्तर्राष्ट्रिय साधना शिविर एवं माताजीको राष्ट्रिय अभिनन्दन समारोह, सवाकरोड मन्त्रजप महाअनुष्ठानले बलियो जवाफ दियो । कठिन परिस्थितिमा पनि आश्रमले अन्य गतिविधिहरूलाई पनि सम्पन्न गर्न सफल भयो । आश्रम संस्थापनाको १३ औँ वर्षको पदार्पणमा संस्थाले धेरै आरोह अवरोधबीच गुज्रनु परे पनि २०६७ साल यसका लागि अति नै उपलब्धिमूलक रहेको गर्व गर्न सकिन्छ । गत वर्ष आश्रमले संचालन गरेका गतिविधिहरूको संक्षिप्त चर्चा यस्तो छ–

## नियमित कार्यक्रम :

सिशकेले नियमितरूपमा सम्पन्न गर्दै आइरहेका कार्यक्रमहरू गत वर्ष पनि सम्पन्न भएका थिए । यसअन्तर्गत दैनिक कार्यक्रमहरू निम्नानुसार छन्–

**दैनिक कार्यक्रम** : सिशकेमा बिहान १० बजेदेखि बेलुकी ५:०० बजेसम्म आश्रम खुल्छ । गत वर्ष पनि यस समयलाई आश्रमले कायम राख्यो । त्यस्तै बेलुकीको ५:०० बजे सम्पन्न हुँदै आइरहेको नित्य गुरु आरती पनि निर्धारित समयमा नियमितरूपमा सम्पन्न भयो ।

**साप्ताहिक कार्यक्रम** : यसअन्तर्गत प्रत्येक बिहीबार सम्पन्न हुँदै आइरहेको गुरूपादुका पूजन प्रत्येक हप्ता सम्पन्न भयो। बेलुकी ४:०० बजे सम्पन्न हुँदै आइरहेको साप्ताहिक स्टाफ मिटिंगलगायत गुरुसेवा दलको बैठक पनि सम्पन्न भए ।

त्यस्तै **गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम** पोखरा, चितवन, धनगढी, सुर्खेत, गोरखा, भैरहवा, दाङ, पाल्पा, सिन्धुली, दमौली, कोहलपुर जिल्लामा १६ वटा एफ.एम. स्टेशनहरूबाट साप्ताहिकरूपमा प्रशारण भयो ।

त्यस्तै मासिक कार्यक्रमअन्तर्गत **दिव्य गुरु महोत्सव, मासिक हवन कार्यक्रमहरु श्री शिवगोरक्ष हवन, तान्त्रोक्त वटुक भैरव हवन, तान्त्रोक्त महालक्ष्मी हवन, तान्त्रोक्त वगलामुखी हवन कार्यक्रम** क्रमश: प्रत्येक महिनाको पहिलो सोमबार, मंगलबार, बुधबार र बिहीबार निर्धारित समयमा सम्पन्न भए। त्यसरी नै सम्पर्क कार्यालय रामघाट, कास्कीले **माता विन्ध्यवासिनी हवन** विन्ध्यवासिनी मन्दिर प्रांगणमा प्रत्येक महिनाको पहिलो बुधबार र सम्पर्क कार्यालय दमौली, तनहुँले **महर्षि वेदव्यास हवन** प्रत्येक बिहीबार व्यासगुफा परिसरमा सम्पन्न गऱ्यो । त्यस्तै पहिलो मंगलबार नै काभ्रेमा तान्त्रोक्त चण्डेश्वरी हवन चण्डेश्वरी मन्दिरमा तथा भक्तपुरको सूर्यविनायक मन्दिर प्रांगणमा गणेश हवन सम्पन्न भएको थियो ।

मासिकरूपमा भइरहेको **तालिम तथा प्रशिक्षण कार्यक्रम** फाल्गुण महिनामा गुरुसेवा दलको तालिमबाट पुन: शुरु भयो । गत वर्षको चैत्र महिनामा आध्यात्मिक नेतृत्वकर्ताहरूको तालिम सम्पन्न गरिएको थियो ।

## वार्षिक कार्यक्रम :

**सद्गुरुदेव अवतरण दिवस** : परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज यस धरतीमा आउनुभएको दिवसको रूपमा मनाइने अवतरण दिवस गत वर्ष ७५ औँ अवतरण दिवसको रूपमा मनाइएको थियो। परमपूज्य सद्गुरुदेवको विशेष पूजन, स्तुति, वन्दना, स्तवन पाठ, मन्त्रजप, विशेष ध्यान, हवन, आरती, भजनकीर्तन, नृत्य, वर्थ डे केक काट्ने आदि विविध कार्यक्रमका बीच अवतरण दिवस मनाइएको थियो ।

सिशकेले वर्ष वर्षमा सम्पन्न गर्दै आइरहेको कार्यक्रममा **रोट महोत्सव** पनि एउटा ठूलो कार्यक्रम हो । सिशकेले गत वर्ष सातौँ रोट महोत्सव भव्य एवं दिव्य रूपमा सम्पन्न गऱ्यो ।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले महाप्रयाण लिनुभएको दिन (जुलाई ३) लाई सिशकेले **महाप्रयाण दिवस**को रूपमा मनायो। सिशके केन्द्रीय कार्यालयलगायत यसका विभिन्न जिल्लाहरूमा रहेका सम्पर्क कार्यालयहरूमा पनि यस

कार्यक्रमलाई सम्पन्न गरिएको थियो । कार्यक्रममा बिहान ९:०० बजेदेखि बेलुकी ४:०० बजेसम्म सद्‌गुरुदेवको दिव्य मन्त्रको जप गरिएको थियो । कार्यक्रममा वृद्धवृद्धाहरूलाई खाना खुवाइएको थियो भने एकजना वृद्धलाई एकजोर कपडा दान गरिनुका साथै पशुपतिमा रहेको वृद्धाश्रममा फलफूल वितरण गरिएको थियो । कार्यक्रम देशभरि रहेका सम्पर्क कार्यालयहरूमा पनि मनाइएको थियो ।

शिष्यहरूको लागि महान पर्व **गुरु पूर्णिमा**लाई सिशकेले आफ्ना समस्त सम्पर्क कार्यालयहरूमा समेत गरी भव्य र नवीन उमंगका साथ मनायो । कार्यक्रममा शोभायात्रा, स्तवन, स्तुति, गुरूपूजन, हवन, लक्षदीप अर्पण, गुरुआरती, संकीर्तन, मन्त्रजप, प्रवचन, भजनकीर्तन आदि क्रमहरू सम्पन्न भएका थिए । उक्त दिनको शोभायात्रा काष्ठमण्डप वसन्तपुरबाट हात्तीसहित भएको थियो ।

वार्षिकरूपमा सम्पन्न हुँदै आएको कार्यक्रममा श्री **शिवगोरक्ष महोत्सव** पनि वृहत्‌रूपमा सम्पन्न भयो । श्रावण महिनालाई शिवगोरक्ष महिनाको रूपमा मनाउने क्रममा गत वर्ष श्रावण महिनाभरि नै विभिन्न कार्यक्रमहरूका साथ गोरक्ष महोत्सव मनाइएको थियो । केन्द्रमा बिहान ७ घण्टा हवन, रोट अर्पण दैनिकरूपमा सम्पन्न भएको थियो भने प्रत्येक सोमबार रुद्राभिषेक तथा रुद्रीपाठ सम्पन्न भएको थियो । आश्रमको इतिहासमा नै पहिलोपटक सम्पन्न भएको यस कार्यक्रममा नयाँ साधकसाधिकाहरूको विशेषरूपमा सहभागिता रहेको थियो ।

त्यस्तै पूजनीय गुरुमाताको शुभजन्मोत्सव मनाउने क्रममा गत वर्ष **७८ औं शुभजन्मोत्सव** मनाइएको थियो । विशेष भजनकीर्तन गरी मनाइएको उक्त कार्यक्रममा पूजनीय माताजीको निर्देशनअनुसार केक पनि काटिएको थियो । उक्त अवसरमा माताजीबाट सिशकेका समस्त कार्यकर्ता साधकसाधिकाहरूलाई आशीर्वाद प्रदान भएको थियो । माताजीको मुखारविन्दबाट आशीर्वाद सुनाउनका लागि प्राविधिक व्यवस्था पनि गरिएको थियो । उक्त अवसरमा बेलुकी दीपावली पनि गरिएको थियो । कार्यक्रम सिशकेका समस्त सम्पर्क कार्यालयहरूमा पनि भव्यरूपमा सम्पन्न भएको थियो ।

त्यस्तै विशेष चाडपर्वहरूमा सम्पन्न गरिँदै आइएका कार्यक्रमहरूमा **नववर्ष**, **ऋषितर्पणी**, **नागपञ्चमी**, **श्रीकृष्णाजन्माष्टमी**, **ऋषिपञ्चमी**, **हरितालिका तीज**, **नवरात्रि**, **देउसीभैलो**, **दीपावली**, **श्रीपञ्चमी**, **महाशिवरात्रिलगायत**का कार्यक्रमहरू सम्पन्न भए । विजयादशमीको पावन अवसरमा आश्रम परिसरमा परमपूज्य सद्‌गुरुदेवहरूको दिव्य तस्विरलगायत दुर्गा भवानी, श्री सिद्धि विनायक, माता लक्ष्मी, माता सरस्वती र कुमार कार्तिकेयको पूर्ण कदको मूर्तिलाई सजाएर कोजाग्रत पूर्णिमासम्मका लागि दर्शनार्थ स्थापना गरिएको थियो । त्यस्तै घटस्थापनाका दिन आश्रममा जमरा राखिएको थियो । बडादशैँको पावन अवसरमा आरतीपछि भजनकीर्तन पनि सम्पन्न गरिएको थियो । सम्पर्क कार्यालयहरूमा मूर्ति स्थापनाका साथै नवार्ण मन्त्रजप पनि सम्पन्न भएका थिए । भाद्र महिनादेखि संचालन भएको विशेष हवन आश्विनमा पनि कायम रहेको थियो । श्रीपंचमीको अवसरमा माता सरस्वतीको पूजन सम्पन्न गरिएको थियो । त्यसैगरी शिवरात्रिको अवसरमा भगवान् शिव र जन्माष्टमीमा भगवान् श्रीकृष्णको विधिवत्‌रूपमा पूजन सम्पन्न गऱ्यो ।

प्रकाशनतर्फ **गोरक्ष निखिल वाणी**को प्रकाशन सदा झैं गत वर्ष पनि नियमित भयो । गत वर्ष निखिल, गोरख, गौ, पशुपतिनाथ, आयुर्वेद, महालक्ष्मी, विजयादशमी, नाथ, सद्‌गुरु, शिव, काली विशेषको रूपमा गोरक्ष निखिल वाणीलाई प्रकाशित भएको थियो भने उक्त वर्षको माघ महिना गुरुमाता विशेषांकको रूपमा प्रकाशित भएको थियो ।

### सवाकरोड अखण्ड मन्त्रजप अहाअनुष्ठान

परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपावश सिद्धाश्रम शक्ति केन्द्र नेपालले ऐतिहासिक जिल्ला गोरखाको गोरखगुफामा महाशिवरात्रिमा सवाकरोड गुरु गोरखनाथको गुरुमन्त्र जपको अखण्ड महाअनुष्ठान सम्पन्न गऱ्यो । उक्त कार्यक्रममा रातदिन मन्त्रजपको अनुष्ठान चलेको थियो । मन्त्रजप अनुष्ठानका लागि साधकसाधिकाहरू विभिन्न स्थानबाट आउनुभएको थियो । महाअनुष्ठानमा मन्त्रको संख्या १ करोड तीस लाख पुगेको थियो ।

### पूजनीय गुरुमाताको राष्ट्रिय अभिनन्दन र अन्तर्राष्ट्रिय साधना शिविरको आयोजना

सिशकेले ऐतिहासिक र अद्वितीय कार्यक्रमको रूपमा सम्पन्न गर्न सफल भएको पूजनीय गुरुमाता भगवती

देवी श्रीमालीज्यूको राष्ट्रिय अभिनन्दन तथा अन्तर्राष्ट्रिय साधना शिविर गत वर्षको महान् उपलब्धिको रूपमा अंकित हुन पुगेको थियो । पूजनीय माताजीको अभिनन्दन राष्ट्रियरूपमा सम्माननीय उपराष्ट्रपतिज्यूले गर्नुभएको थियो भने पूजनीय गुरुमाताको मुखारविन्दबाट इतिहासमा नै पहिलोपटक गुरुमन्त्र प्रदान भएको थियो । सिशकेको आयोजनामा सम्पन्न दुई दिवसीय कार्यक्रममा अष्टलक्ष्मी साधना, विभिन्न प्रयोगहरू, विभिन्न शक्तिपात दीक्षाहरू पनि प्रदान गरिएको थियो । पूजनीय गुरुमाता एवं अरविन्द गुरुदेवको सान्निध्यतामा सम्पन्न भएको उक्त कार्यक्रम पशुपति वनकालीमा गत वर्षको माघ २२ र २३ गते सम्पन्न भएको थियो ।

## होली पूर्णिमा

पूजनीय माताजीको आमन्त्रणमा गत वर्ष होली पूर्णिमामा आश्रमबाट केही साधकसाधिकाहरूको टोली गुरुधाम जोधपुरको यात्रामा गएका थिए । गुरुधाममा माताजीको पूजन गर्ने सौभाग्य पाउनुका साथै त्यहाँ सम्पन्न शिविरमा गुरुकार्यको शुभ अवसर पनि हासिल भएको थियो । शिविरमा संस्थाको अन्तर्राष्ट्रिय छविलाई अझै दरिलो बनाउने कार्य सम्पन्न भयो भने उक्त अवसरमा जोधपुरमा सिशकेको धेरै प्रशंसा भएको थियो ।

सिशकेअन्तर्गत संचालन भइरहेको **गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम**ले गत वर्ष एसएलसी परीक्षामा विद्यार्थीहरूलाई सम्मिलित गराएको थियो । विद्याश्रमभित्र र बाहिरी विभिन्न प्रतियोगिताहरूमा कार्यक्रमहरूमा भाग लिएर विद्याश्रमले पुरस्कारहरू पनि हात पार्न सफल भयो भने खारिने तालिमहरू पनि विद्यार्थीहरूले लिने अवसर पाएका थिए ।

**ध्यान तथा साधना कार्यक्रम**अन्तर्गत विभिन्न चरणका ध्यानहरू सम्पन्न भए भने अष्टलक्ष्मी साधना, गोरखकाली साधना पनि सम्पन्न भएका थिए ।

यसरी २०६७ साल सिशकेका लागि अति नै उपलब्धिमूलक रहेको थियो । यस वर्षमा सम्पन्न अन्तर र्‍ाष्ट्रिय साधना शिविर र पूजनीय गुरुमाताको अभिनन्दन समारोहले संस्थालाई अन्तर्राष्ट्रिय रूपमा स्थापित गर्‍यो भने सवाकरोड मन्त्रजप महाअनुष्ठान पनि अद्वितीय र ऐतिहासिक रह्यो । अन्य सम्पन्न कार्यक्रमहरूले पनि संस्थालाई थप गतिशील बनायो ।

जय गुरुदेव !

# आठौँ रोट महोत्सव-२०६८

## पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यू तथा गुरुदेव अरविन्द श्रीमालीज्यूको सान्निध्यतामा

# सवा लाख रोट महोत्सव

# विशेष साबर साधना तथा शक्तिपात दीक्षाहरू

**मितिः २०६८ जेठ ३ गते (गोरक्ष प्रकट दिवस) देखि**
**जेठ १३ गतेसम्म**
**स्थानः गोरख गुफा, गोरखा**

---

*साधना कोटा सीमित भएकाले आजै आफ्नो नाम लेखाउनु भई ढुक्क हुनुहोस् ।*

**आयोजकः**

**सिद्धाश्रम शक्ति केन्द्र नेपाल**
**बसुन्धरा, काठमाडौँ, फोन २१००१५३**

# नाथ सम्प्रदायमा कुण्डल धारण

नाथयोगीहरूको गर्वको पहिचानको रूपमा रहेको कुण्डल लगाउने प्रथाको बारेमा धेरै कमलाई मात्र थाहा छ । सामान्यतया कानमा कुण्डल लगाएको देख्नेबित्तिकै हाम्रो मानसपटलमा यो 'कानपट्टा योगी' रहेछ भन्ने भाव आउने गर्छ । कान चिर्ने प्रथा, कुण्डल लगाउने प्रथाको बारेमा अध्ययन गर्दा यसको आफ्नै इतिहास भएको पाइन्छ । नाथयोगीहरूको क्षमता, सामर्थ्यको पहिचान हो कानमा लगाउने कुण्डल । एउटा सामान्य साधक जब परमार्थ प्राप्तिमा आत्मसाक्षात्कारको दिशातर्फ अगाडि बढ्दै जान्छ, आवश्यक अवस्थाहरू पार गर्दछ, तबमात्र कान छेड्ने अधिकारी बन्दछ । कानको दुवैतिर चिरेर विशिष्ट आकृतिका विभिन्न धातु, रत्न, माटो, विभिन्न पशुहरूका छाला, दाँतबाट निर्मित कुण्डल धारण गर्ने नाथ सम्प्रदायको यो प्रचलन धेरै अघिदेखिको मानिन्छ । दर्शन अथवा मुद्रा भनेर पनि चिनिने कुण्डललाई लगाउने व्यक्ति नाथ सम्प्रदायमा श्री श्री महायोगी गुरु गोरखनाथका अनन्य उपासक मानिन्छन् ।

कुण्डल विभिन्न धातु तथा रत्नबाट बनाइए पनि माटोबाट निर्मित कुण्डल पवित्र मानिन्छ। माटोबाट कुण्डल बनाउनुअघि काँचो माटोलाई पानीमा भिजाइन्छ। त्यसपछि छानेर कुटिन्छ र छायाँमा सुकाइन्छ। कुटेको माटोलाई पिँधेर धूलो बनाइसकेपछि पुनः छानिन्छ । छानेर त्यस धूलोलाई मुछेर त्यसलाई रोटीको स्वरूप दिइन्छ । उक्त रोटीलाई कुण्डल बनाउन प्रयोग गरिन्छ। माटोको कुण्डललाई खस्रो

हुनबाट बचाउन सीसाले घोट्ने गरिन्छ। घोटेर टल्काएपछि माटोको कुण्डल निकै नै आकर्षक देखिने गर्दछ । यस कुण्डललाई धारण गरेपछि एक वर्षसम्म लगाउनुपर्ने चलन पनि नाथ सम्प्रदायमा पाइन्छ। अझ माटोभन्दा पनि गैँडाको छाला, खागबाट बनाइएका कुण्डल नाथ सम्प्रदायमा पवित्र मानिन्छन् । गैँडाको छाला र सिङबाट विभिन्न आकारमा बनाइने कुण्डल धेरैआकर्षक पनि हुने गर्दछ। त्यस्तै हात्तीको दाँतबाट पनि कुण्डल बनाएर धारण गर्ने चलन छ। असुरोको पातलाई कुण्डलको स्वरूप दिएर धारण गर्ने परम्परा पनि नाथयोगीहरूमा नरहेको होइन। त्यस्तै, हिरा, पन्ना, सुनजस्ता बहुमूल्य धातु विभिन्न रत्न, स्फटिकका कुण्डल पनि धारण गर्ने चलन नाथ सम्प्रदायमा पाइन्छ ।

कुण्डल धारणका लागि सर्वप्रथम कान चिर्नु आवश्यक हुन्छ र कान चिर्ने काम गुरुले मात्र सम्पन्न गर्ने गर्दछन् । कान चिर्ने बेलामा यदि कानबाट धेरै रक्तस्राव भएमा मन्त्रोच्चारण गरेर गुरुले नै त्यस स्रावलाई रोक्न सक्षम हुन्छन्, अन्य व्यक्तिहरूले होइन। लापर्वाहीसँग जसले पायो त्यसैले कान चिर्दा धेरै रक्तस्राव हुन गई व्यक्तिको मृत्युसमेत हुन सक्छ। त्यसैले यस्ता घटनाबाट बच्न गुरुले नै कान चिर्ने प्रावधान नाथयोगीहरूमा यद्यपि चलिरहेको छ। कान चिर्नका लागि १० वर्षभन्दा माथिको मानिसलाई उपयुक्त मानिन्छ। कान चिरेर कुण्डल धारण गरिसकेपछि त्यस्ता व्यक्तिलाई 'कानफट्टा' वा 'कानचिरुवा' भन्ने चलन छ। तर कानफट्टाभन्दा पनि कानचिरुवा भनेको सुन्न मन पराउँछन् नाथयोगीहरू । यस सम्प्रदायमा सबै जातजातिले कुण्डल धारणका लागि अधिकार पाए पनि पानी नचल्ने वर्ग यस सौभाग्यबाट वञ्चित छन् ।

कुण्डल धारण कुनै शारीरिक वा मानसिक लाभका लागि नभई एउटा सम्प्रदायको अस्तित्वको पहिचान दिलाउन धारण गर्ने गरेको कुरा नाथयोगीहरू बताउँछन्। श्री श्री महायोगी गुरु गोरखनाथका अनन्य उपासक र शिष्यको पहिचान दिने कुण्डलले नि:सन्देह शारीरिक तथा मानसिकरूपमा विभिन्न लाभ दिने कुरालाई अस्वीकार गर्न सकिन्न । कुण्डलमा प्रयोग गरिने धातु तथा रत्न विभिन्न रोग तथा ग्रहशान्तिका लागि उपयुक्त मानिन्छन्। यस अर्थमा यस्ता वस्तुबाट निर्मित कुण्डलधारीलाई निश्चय नै फाइदा हुने कुरा निर्विवाद छ । कुण्डल लगाउँदा गुरुले कानमा

मन्त्र फुक्ने गर्दछन् । कुण्डल धारणपश्चात् माछा, मासु, जाँड, रक्सीजस्ता तामसी भोजन त्याग्नुपर्ने प्रचलन पनि यस सम्प्रदायमा रहेको छ । मृत्युपछि कुण्डललाई लाससँगै गाड्ने गरिन्छ । क्रमश:

जय गुरुदेव !

# आफ्नो हात आफै हेरौं

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौं । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

## स्वास्थ्यरेखा

२१. यदि स्वास्थ्यरेखाबाट कैयौं ससाना शाखाहरू तलतिर गएका छन् भने उसको स्वास्थ्य जीवनभर कमजोर रहन्छ (गतांकमा २१ नं. को यस बुँदामा उपरोक्त सन्दर्भ हुनुपर्नेमा अन्यथा पर्न गएकोले क्षमाप्रार्थी छौं ।)

२२. यदि स्वास्थ्यरेखाबाट कुनै प्रशाखा सूर्य पर्वततिर गएको छ भने त्यस व्यक्तिसित अतुलनीय धन हुन्छ

२३. यदि स्वास्थ्य रेखाको कुनै प्रशाखा शनि पर्वततिर गएको छ भने त्यो व्यक्ति स्वास्थ्यको दृष्टिबाट गम्भीर, मननशील तथा दीर्घायु हुन्छ

२४. यदि स्वास्थ्यरेखामा चन्द्ररेखा आएर मिल्छ भने त्यो व्यक्ति सफल कवि हुन्छ तथा कैयौंपटक विदेश यात्रा गर्दछ

२५. यदि स्वास्थ्यरेखाबाट कुनै प्रशाखा अर्द्धवृत्तजस्तो बनाउँदै मंगल पर्वततिर गएको देखिन्छ भने त्यो व्यक्ति सफल भविष्यवक्ता हुन्छ

२६. यदि मानिसको हत्केलामा स्वास्थ्यरेखाले हृदयरेखालाई काटेको देखिन्छ भने त्यस व्यक्तिलाई मिर्गीको रोग हुन्छ

२७. यदि लहरादार स्वास्थ्यरेखाले भाग्यरेखालाई स्पर्श गर्दछ भने व्यक्तिको भाग्य जीवनभरि कमजोर हुन्छ

२८. यदि यस्तो रेखाले मस्तिष्करेखालाई छुन्छ भने व्यक्तिको दिमाग अति नै कमजोर हुन्छ

२९. यदि लहरादार स्वास्थ्यरेखाले सूर्य पर्वतलाई स्पर्श गर्दछ भने उसले जीवनमा कैयौं बदनामीको सामना गर्दछ

३०. यदि स्वास्थ्यरेखा लहरादार छ र तथा यसले बुध पर्वतलाई पार गरेको छ भने व्यापारमा ठूलो हानि हुन्छ

३१. यदि औंलाहरू तीखा छन् र हत्केलामा स्वास्थ्यरेखाको अभाव छ भने त्यो व्यक्ति क्रियाशील हुन्छ

३२. यदि बुध पर्वत अत्यन्त विक्षिप्त छ र स्वास्थ्यरेखाको अभाव देखिन्छ भने व्यक्ति रमाइलो स्वभावको हुन्छ

३३. यदि लहरादार बुधरेखा मोडिएर शुक्र पर्वततिर गएको छ भने प्रेमको क्षेत्रमा ठूलो धक्का लाग्छ

३४. यदि स्वास्थ्यरेखामा द्वीपको चिह्न देखिन्छ भने उसलाई रक्तसम्बन्धी रोग हुन्छ तथा उसको फोक्सो कमजोर हुन्छ

३५. यदि स्वास्थ्यरेखाको आसपास कैयौं ससाना रेखाहरू छन् भने व्यक्तिको स्वास्थ्य सधैं कमजोर रहन्छ

३६. यदि स्वास्थ्यरेखा जीवनरेखाबाट बढेर मस्तिष्करेखा तथा हृदयरेखालाई स्पर्श गर्दै अगाडि बढेको छ भने उसलाई जीवनमा कमजोरी रहन्छ

३७. यदि जीवनरेखाका साथ यो रेखा जोडिएको छ तर यस रेखामा निलो धब्बा छ भने उसलाई हृदयरोगको समस्या रहिरहन्छ

३८. यदि मस्तिष्करेखाको अन्तमा र स्वास्थ्यरेखाको अन्तमा क्रस छ भने व्यक्ति सफल हुन्छ

३९. यदि स्वास्थ्यरेखा कहीं चम्किलो तथा कहीं फिका देखिन्छ भने तथा टुक्रामा विभाजित भएको देखिन्छ भनेव्यक्तिको स्वास्थ्य जीवनभर कमजोर रहन्छ

४०. यदि स्वास्थ्यरेखा कमजोर र अति नै पातलो छ भने उसको अनुहारमा थकाइ सुस्ती देखिनैरहन्छ

४१. यदि स्वास्थ्यरेखा र सूर्यरेखाको परस्पर सम्बन्ध बनेको छ भने त्यस व्यक्तिको मस्तिष्क अति नै उर्बर हुन्छ

४२. यदि यस रेखाको अन्तमा क्रस छ अथवा मस्तिष्क रेखामा पनि क्रसको चिह्न छ भने व्यक्ति जीवनमा अन्धो हुन्छ

४३. यदि स्वास्थ्यरेखाको मार्गमा कहीं तेस्रो रेखाले काट्दछ भने आयुको त्यस भागमा ठूलो दुर्घटना हुन्छ

४४. यदि रेखामा ताराको चिह्न छ भने उसलाई जीवनमा परिवारको सहयोग प्राप्त हुँदैन

४५. यदि स्वास्थ्यरेखाको आसपास क्रसको चिह्न देखिन्छ भने उसको जीवनमा कैयौंपटक दुर्घटना हुन्छ

४६. यदि राहु क्षेत्रमा जाँदै गर्दा स्वास्थ्यरेखामा द्वीपको चिह्न देखिन्छ भने यस्तो व्यक्ति टि.बी. रोगबाट पीडित रहन्छ

४७. यदि मस्तिष्करेखामा द्वीपको चिह्न देखिन्छ र त्यस द्वीपमाथिबाट स्वास्थ्यरेखा गएको छ भने व्यक्तिको स्वास्थ्य जीवनमा अति नै कमजोर रहन्छ

४८. यदि भाग्यरेखा काटिएको छ भने तथा स्वास्थ्यरेखामा द्वीपको चिह्न देखिन्छ भने व्यक्ति आर्थिक दृष्टिबाट पीडित रहन्छ

४९. यदि स्वास्थ्यरेखा हत्केलाभित्र दबिएको देखिन्छ भने उसलाई गुप्तरोग लाग्छ

५०. स्वास्थ्यरेखामा देखिएको क्रसले स्वास्थ्यको हानिको संकेत गर्दछ

५१. यदि स्वास्थ्यरेखामा नक्षत्र छ भने व्यक्तिलाई पारिवारीक सुख मिल्दैन

५२. यदि बुधरेखा तथा प्रणयरेखा आपसमा मिलेको छ भने त्यस व्यक्तिको पत्नीको स्वास्थ्य जीवनभर कमजोर रहन्छ

५३. यदि दुवै हत्केलामा स्वास्थ्यरेखा स्पष्ट छ भने त्यो व्यक्ति कामुक तथा भोगी हुन्छ

५४. यदि स्वास्थ्यरेखा दोहोरो छ भने व्यक्ति श्रेष्ठ भाग्यका स्वामी हुन्छ

५५. दोहोरो स्वास्थ्यरेखाले सूर्य पर्वतलाई पनि स्पष्ट गर्दछ भने व्यक्तिले राजनीतिमा अति नै श्रेष्ठ पद प्राप्त गर्दछ

५६. स्वास्थ्यरेखा तथा हृदयरेखाको मिलन बुध पर्वतमुनि हुन्छ भने व्यक्तिको मृत्यु हृदयाघातबाट हुन्छ

५७. स्वास्थ्यरेखाको साथमा कुनै सहायक रेखा पनि सँगसँगै छ भने व्यक्तिको स्वास्थ्य अति नै श्रेष्ठ मान्नुपर्दछ

५८. स्वास्थ्यरेखा ठीक भए पनि नङहरूमा पहेँला धारहरू देखिन्छन् भने त्यस व्यक्तिको असामयिक मृत्यु हुन्छ

५९. यदि स्वास्थ्यरेखा तलबाट पुष्ट छ तर माथि जाँदाजाँदै क्षीण हुँदै गएको देखिन्छ भने व्यक्तिको यौवनकालमा नै मृत्यु हुन्छ

६०. यदि स्वास्थ्यरेखा मणिबन्धबाट निक्लेको छ तर टुटेको देखिन्छ भने त्यस व्यक्तिको मृत्यु शीघ्र हुन्छ भन्ने बुझ्न सकिन्छ

६१. यदि स्वास्थ्यरेखामा जालीको चिह्न छ भने व्यक्तिले पूर्ण आयु भोग्न पाउँदैन

६२. जीवनरेखा तथा स्वास्थ्यरेखाको आपसमा सम्बन्ध हुन जान्छ र माथि ताराको चिह्न देखिन्छ भने व्यक्तिको मृत्यु यात्रामा हुन्छ

६३. यदि आवश्यकताभन्दा लामो नङ भने व्यक्तिलाई स्नायुसम्बन्धी रोग हुन्छ

६४. यदि नङको रङ निलो छ भने व्यक्ति पक्षाघातबाट पीडित रहन्छ। यदि नङ ससाना छन् र स्वास्थ्यरेखा काटिएको छ भने व्यक्तिलाई मिर्गीको रोग लाग्छ

६५. जीवनरेखा कमजोर छ तथा बुधरेखा लहरदार छ भने उसलाई गठियाको रोग हुन्छ

६६. उत्तम स्वास्थ्यरेखा व्यक्तिका लागि सबै दृष्टिबाट सुखदायक मानिन्छ । हस्तरेखा विशेषज्ञले स्वास्थ्यरेखाको सावधानीपूर्वक अध्ययन गर्नुपर्दछ । यस रेखाबाट पहिले नै भविष्यमा हुने रोग तथा दुर्घटनाहरूको बारेमा जानकारी नै लिन सकिन्छ र यसबारेमा चेतावनी दिएर व्यक्तिलाई सावधान गर्न सकिन्छ ।

वस्तुत: स्वास्थ्यरेखाका महत्त्व हत्केलामा अन्यतम छ, यसमा दुईमत छैन । जय गुरुदेव !

# निबुवाको उपयोगिता

**परिचय**

निबुवा प्रत्येक घरमा पाइने वा उत्पादन गर्न सकिने फलमध्ये एउटा हो । निबुवा हाम्रो स्वास्थ्यको लागि अति महत्त्वपूर्ण औषधि मानिएको छ। यसको प्रयोग धेरै रोगहरूमा गर्न सकिन्छ। निबुवा एउटा साधारण फल हो। यसको गुण हेर्दा अति महत्त्वपूर्ण छ। निबुवामा पाइने तत्त्व Vitamin C हो। यसको कमीबाट स्कर्वी, हाडजोर्नीमा दुखाइ, रक्तश्राव तथा दाँतसम्बन्धी रोग जस्तै : दन्तहर्षाजस्ता रोगहरू देखा पर्दछन्। यस्ता रोगहरूमा लाभ पुऱ्याउनुका साथै Vitamin C ले अन्य चर्मरोगहरूको नाश गर्न राम्रो काम गर्दछ ।

निबुवामा पोटासियम, कार्वोवेज, साइट्रिक एसिड, फास्फोरिक एसिड, कार्बोहाइड्रेड एवं अन्य मानिसलाई नभई नहुने खनिज पदार्थहरू पाइन्छन् । निबुवामा पाइने पोटासियमको मुख्य काम हृदय र रक्तवाहिनी नलीलाई शक्ति दिने र त्यसमा लचक पैदा गर्ने हो। कार्वोवेजले शरीरमा बल र गर्मीलाई स्थिर राख्नको लागि महत्त्वपूर्ण भूमिका खेलेको हुन्छ। साइट्रिक एसिड र पोटासले ज्वरो, अमिलो डकार र मुखमा पानी आउने, हृदय, छाति पोल्ने, पेट दुख्नेजस्तामा लाभ गर्दछ। निबुवालाई नेपालीमा निबुवा, संस्कृतमा निंव, त्रिम्पाक, अंग्रेजीमा लेमन, लेटिनमा साइट्रस एसिड वा लेमोनिया एसिडा, स्थानीय भाषामा कागती निबुवाको नामले पुकार्ने चलन छ ।

निबुवाको रसमा अल्प परिमाणमा फास्फोरिक एसिड, कार्बोहाइड्रेड र मुख्यतया साइट्रिक एसिड करिब ३ देखि १२ प्रतिशतसम्म हुन्छ । यसको बोक्रामा एक प्रकारको उडनसिल तेल पाइन्छ । अरू फलको रसको दाँजोमा निबुवाको रसमा मानव संजीवनी Vitalizing Acid विशेष परिमाणमा पाइन्छ । निबुवाको प्रयोग गर्न सकिने केही अवस्था तल उल्लेख गरिएको छ ।

**गोरो रंग बनाउने क्रिम :-**

छालाको रंग गोरो बनाउनको लागि घाममा सुकाएको बोक्रा पिसी थोरै वेसन मिलाई त्यसमा चिसो दूध घोली अनुहारमा क्रिमजस्तो गरी लगाउने, १५ मिनेटसम्म अनुहारमा लगाई राम्रोसँग मालिस गर्ने र धुने । यसको प्रयोगबाट अनुहार गोरो र चम्किलो हुन्छ ।

**मुखबाट रगत आएमा :-**

कागती निबुवाको रसलाई १ गिलास पानीमा निचोरी पिउनाले गिजाबाट बगेको रगत रोकिन्छ ।

**पैतलामा बढी पसिना आउने भएमा :-**

पैतलामा बढी पसिना आउँछ भने त्यसलाई हटाउन गरम पानीमा निबुवाको रस मिलाई खुट्टा धुनाले ठीक हुन्छ ।

**काटेको ठाँउबाट बढी रगत बगेमा वा नाथ्रो फुट्ने रोग भएमा :-**

काटेको ठाउँबाट बढी रगत बग्ने भएमा निबुवा निचोरी हाल्नाले रगत बन्द हुन्छ। नाथ्रो फुट्ने रोग भएमा निबुवा निचोरी कपडामा छानेर नाकमा पिचकारी दिनाले रगत बन्द हुन्छ ।

**मुखको घाउ ठीक गर्नु परेमा :-**

यो रोग ८० प्रतिशत पेटसम्बन्धी रोगको कारणले हुने गर्दछ। खाली पेटमा २० एम.एल. जति निबुवाको रस निचोरी नुन वा मिश्री मिलाई नित्य पिउने हो भने पेटको विष बाहिरिन्छ र यो रोग ठीक हुन्छ ।

**दाँत सेतो र चम्किलो बनाउन :-**

निबुवाको बोक्रालाई सुकाई जलाउने र राम्रोसँग पिसी त्यसमा सिँधेनुन मिलाई दाँत माझ्नाले दाँत सेतो र चम्किलो बनाउँछ ।

**ओंठ कालो भएमा:-**

निबुवा र ग्लिसिरिन मिलाई ओंठमा लगाउनाले कालोपन हटाई ओंठलाई रातो र राम्रो बनाउँछ ।

**गर्दनको मैला फाल्नु परेमा :-**

चिसो मौसममा गर्दनमा मैला ज्यादा जम्ने हुनाले मयल

सफा गर्नु परेमा निबुवा काटी राम्रोसँग गर्दन सफा गर्नाले सबै मयल सफा हुन्छ ।

**गिजा फुल्ने, दाँतबाट रगत बग्ने भएमा :-**

निबुवाको बोक्राले दाँत माइनाले र हल्का मनतातो पानीले कुल्ला गर्नाले यो रोग ठीक हुन्छ ।

**मुख वा सास गन्हाउने भएमा :-**

निबुवाको रस १ भाग अर्कगुलाब २ भागमा मिलाई बिहान बेलुकी कुल्ला गर्नाले मुखको दुर्गन्ध हटाउँछ ।

**आँखाको तल्लो भागको कालो पोतो हटाउन परेमा :-**

यस दागमा निबुवाको रस नौनी घिउमा मिलाई लगाउनाले आँखाको तल्लो भागको कालो पोतो हटाउने काम गर्दछ ।

**चाउरी परेको छाला ठीक गर्नु परेमा :-**

निबुवाको रसमा गुलाबजल मिलाई लगाउनाले चाउरी परेको छाला राम्रो हुन्छ ।

**गन्जापन** (Alopecia) **:-**

१ देखि २ चम्चा जति चनाको बेसनको गाढा घोल बनाई एउटा निबुवाको रस त्यसमा मिलाई टाउकोमा लगाउने, १/२ घण्टापछि साबुनपानीले टाउको सफा गर्ने र राम्रोसँग सफा कपडाले पुछेर नरिवलको तेलमा निबुवाको रस आवश्यकताअनुसार मिलाई टाउकोमा दल्ने गरेमा केही दिनपछि क्रमश: कपाल आउन थाल्दछ ।

खोकी :-

मह र निबुवाको रस मिलाई चपाउनाले खोकी कम हुन्छ ।

**कब्जियत हटाउन परेमा :-**

एउटा निबुवाको रस १ गिलास मनतातो पानीमा राखी राती सुत्ने बेला लिने गरेमा कब्जियतको समस्याबाट बिस्तारै छुटकारा पाउन सकिन्छ ।

*–डा. आर. बी. बोहरा,*
***नवलपरासी***



## २०६८ वैशाख महिनामा पर्ने चाडपर्वहरू

| मिति | चाडपर्व |
|---|---|
| वैशाख १ गते | नयाँवर्ष २०६८ शुभारम्भ, कामदा एकादशी<br>**तान्त्रोक्त बगलामुखी हवन,**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| वैशाख ५ गते | **श्री शिव गोरक्ष हवन**<br>**गो.नि.ज्यो.दि.वि.को वार्षिकोत्सव** |
| वैशाख ६ गते | **तान्त्रोक्त वटुक भैरव हवन**<br>**तान्त्रोक्त गणपति हवन** |
| वैशाख ७ गते | **तान्त्रोक्त महालक्ष्मी हवन,**<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| वैशाख ८ गते | **सद्गुरुदेव अवतरण दिवस**<br>**सिद्धाश्रम शक्ति केन्द्रको वार्षिकोत्सव** |
| वैशाख १२ गते | गोरखकाली पूजा |
| वैशाख १५ गते | बरुथिनी एकादशी व्रत |
| वैशाख २० गते | माताततीर्थ औंसी, (आमाको मुख हेर्ने) |
| वैशाख २३ गते | अक्षय तृतीया |
| वैशाख २८ गते | गोरखकाली पूजा |
| वैशाख ३० गते | मोहिनी एकादशी |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# प्रत्यक्षमात्रै सबथोक होइन

– पं. श्रीराम शर्मा आचार्य

इन्द्रियहरूबाट मात्र स्थूल जगतको परिचय मिल्दछ । आँखाबाट दृश्य पदार्थ नै देखिन्छ । कान पनि सीमित ध्वनिहरूलाई मात्र सुन्न सक्षम हुन्छ । नाकको गन्ध क्षमता सीमित छ । जीब्रो समस्त रसहरूको आस्वादन गर्नमा असक्षम हुन्छ । त्वचाले हर चीजलाई छुन सक्दैन । अनेकौं पदार्थ वायुमा उडिरहेका हुन्छन्, उनीहरूको सत्ता विद्यमान हुन्छ तर पनि इन्द्रियहरूबाट त्यसको जानकारी हुँदैन । इन्द्रियातीत पदार्थहरूको जानकारी सूक्ष्मदर्शक एवं दूरदर्शक यन्त्रहरूबाट र दूरवर्ती दृश्यहरूको टेलिस्कोपको सहायताबाट मिल्दछ । स्पष्ट छ कि इन्द्रियजन्य ज्ञान नै सबै कुरा होइन । त्यसको बाहिरको परिधि अझै ठूलो छ । वैज्ञानिकहरूले यस विज्ञानलाई पनि ज्ञानको सीमामा ल्याएर आश्चर्यजनक आविष्कार गर्नमा सफलता पाएका छन् ।

स्थूलजगतझैं अर्को एक सूक्ष्मजगत पनि छ । त्यस्तै स्थूलशरीर झैं एक सूक्ष्मशरीरको सत्ता पनि यस संसारमा विद्यमान छ । त्यसलाई इन्द्रियबाट त देख्न सकिँदैन । तर बुद्धिको सहायताबाट त्यसको अस्तित्वको परिचय राम्ररी मिल्दछ ।

अदृश्य वातावरणको दृश्य जगतमा कस्तो प्रभाव पर्दछ भन्ने बारेमा मौसमविद्हरूले अन्तरिक्षको जानकारी लगाइरहन्छन् अनि वर्षा, हुरी आदिको सम्भावनाहरू सर्वसाधारणलाई अवगत गराउने गर्दछन् ।

स्थूल तथा सूक्ष्मको अन्योन्याश्रित सम्बन्धको सूत्रलाई अधिक प्रत्यक्ष गर्न तथा आदानप्रदानको द्वार खोल्ने चेष्टा योगी, तपस्वीहरूले गरेका छन् । साधनाद्वारा मनुष्यले भित्र र बाहिरको जगतमा विद्यमान सूक्ष्मशक्तिहरूसित सम्पर्क स्थापित गर्दछ । अतीन्द्रिय क्षमताहरू सबैमा विद्यमान हुन्छ, तर त्यस सूक्ष्मसत्तालाई अनुभव गरेर अभीष्ट प्रयोजनमा प्रयुक्त गर्ने स्थिति साधनाको अभ्यासद्वारा नै सम्भव हुन्छ । त्यसरी नै ब्रह्माण्डमा रहेका सूक्ष्मशरीरधारी सत्ताहरूको साथमा सम्बन्ध जोड्नु र तिनीहरूबाट सहायता लिनको लागि साधनाबाट सहज र सुलभ हुन्छ ।

प्रकृति स्थूल हुन्छ भने ब्रह्म सूक्ष्म । एक इन्द्रियगम्य हुन्छ अर्को इन्द्रियातीत । शरीर तथा जीवको सम्बन्धमा पनि यही कुरा भन्न सकिन्छ । अदृश्य पनि हाम्रो लागि दृश्यजस्तै उपयोगी छन् । व्यक्तिको निर्भरता मात्र पदार्थ सम्पदामा टिकेको हुँदैन । पारस्परिक स्नेह, सहयोग पनि त आवश्यक पर्दछ । प्रचुर सम्पत्ति भएर पनि सद्भाव सम्पदाको दृष्टिबाट धनवान् व्यक्तिहरूको तुलनामा मनस्वी तथा योगवीर तेजस्वी अधिक सामर्थ्यवान् मानिन्छ । श्रमिकको तुलनामा विद्वान्को गरिमा ज्यादा हुन्छ । यो दृश्यको तुलनामा अदृश्यको नै गरिमाको एक प्रमाण हो । त्यसैले प्रत्यक्षलाई मात्र प्रमाण मान्नु भनेको त बालकहरूले जस्तो दुराग्रह गर्नु हो । विद्वान् व्यक्ति अदृश्यलाई न त अस्वीकार गर्दछ, न त्यसप्रति उपेक्षा नै । उनको मान्यता त योभन्दा पनि अगाडि हुन्छ । तिनीहरूलाई स्थूलको साथमा श्रम गर्नुभन्दा अधिक लाभदायक सूक्ष्मको साथ सम्बन्ध बढाउँदा हुन्छ । वैज्ञानिकहरूदेखि लिएर योगीहरूको प्रयत्न परायणता आ-आफ्नो ढंगबाट अदृश्य क्षेत्रको अवगाहनमा नै नियोजित रहन्छ ।

अदृश्यको एक नयाँ सत्ताको रहस्योद्घाटन भर्खरभर्खरै भएको छ । थाहा हुन आएको छ कि पदार्थको सबैभन्दा सानो कण जसलाई परमाणु भनिन्छ त्यसको प्रति-द्वन्द्वतामा प्रति परमाणु (Anti Particles) को सत्ता पनि विद्यमान छ । प्रतिपदार्थप्रति विश्वको अस्तित्व अब न त काल्पनिक रहेको छ, न उपहासास्पद, न अप्रामाणिक । भौतिक विज्ञानीहरूले यस तथ्यलाई एकै स्वरले स्वीकार गर्न थालेका छन् कि दृश्य जगतको प्रतिद्वन्दी एवं पूरक एक अदृश्य जगत भित्र आफ्नो सत्ता जमाएर बसेको छ । अनि अविज्ञानरूपबाट यस जगतलाई प्रभावित एवं नियन्त्रित गरिरहन्छ । प्रकारान्तरले यो अध्यात्म मान्यताको स्वीकृति नै हो जसबाट स्थूलको तुलनामा सूक्ष्मलाई अधिक बलिष्ठ एवं सम्पन्न बताइएको छ । साथसाथै त्यसको साथ सम्बन्ध जोड्न सक्ने साधनाहरूको प्रयासमा बल दिइरहेका छन् ।

समस्त विश्ववैभवको प्राण अदृश्य जगतमा सन्निहित छ । यसै प्राणसत्ता वा सूक्ष्मसत्तालाई नै 'प्रतिपदार्थ' एवं

'प्रतिविश्व' भनेर बुझ्न सकिन्छ। नवीन तथ्यअनुसार प्रत्येक पदार्थका साथ त्योभन्दा पनि कैयौँ अधिक सामर्थ्यवान् छायापुरुष प्रतिपदार्थ अदृश्य जगतमा क्रियाशील छ। यसको कल्पना धेरै समय पहिले प्रसिद्ध गणितज्ञ पाल.ए.एम. डिराकले गरेका थिए जो क्याम्ब्रिज विश्वविद्यालयमा गणित शास्त्रका प्रोफेसर थिए । आइन्स्टाइनको सापेक्षवादको सिद्धान्तको स्पष्टस्वरूप वैज्ञानिक किस्नोडिगरले दिएका थिए। पदार्थ ऊर्जामा रूपान्तरित हुने यो सिद्धान्तले वैज्ञानिक डिरकलाई विशेष सहयोग पुग्यो । डिराकले प्रतिपादन गरे कि ऋण आवेशयुक्त इलेक्ट्रोनको साथमा धन आवेशयुक्त इलेक्ट्रोनको अस्तित्व पनि परमाणुमा विद्यमान हुन्छ । यसलाई उनले प्रति इलेक्ट्रोन (Anti electrons) नाम दिएका छन् । श्री डिराकको यस प्रयासलाई अमेरिकाका प्रसिद्ध भौतिक शास्त्री डा. कार्ल डी. एण्डरसनले पनि पुष्टि गरेका छन्। उनले घोषणा गरे कि इलेक्ट्रोनको साथमा विपरीत आवेशयुक्त इलेक्ट्रोनको पनि अस्तित्व परमाणुभित्र हुन्छ । उनले यस नयाँ कणको नाम 'पोजीटन' राखेका छन् । यस नवीन खोजको लागि उनलाई नोवेल पुरस्कार पनि मिल्यो । त्यसपछि अहिलेसम्म त परमाणुका अनेक प्रति कणहरूको अस्तित्व स्पष्ट हुन आइसकेको छ। अमेरिकाका वैज्ञानिकहरू एमेलियो जी. सेगरे, ओवेन चम्बर लेन, सी. बीगेन्द्र तथा पी. वाइपसीलेन्टिसको सामुहिक प्रयासबाट एण्टी प्रोटोन एवं एण्टी न्यूट्रोन कणहरू पत्ता लगाए । यी मूलभूत कणहरूका अतिरिक्त एण्टी न्यूट्रिनोस, एण्टी मेमान्स, एण्टी हाइपेरान्सजस्ता कणहरूको खोजी भएको छ । भौतिकविद्का विज्ञहरूलाई थाहा छ प्रोटोन, न्यूट्रोन, न्यूट्रिनोस मेमान्सहरूबाट नै न्यूक्लियस बनेको हुन्छ । इलेक्ट्रोन यही केन्द्रको वरिपरि चक्कर लगाउने गर्दछ। यी सबै कणहरू मिलेर नै परमाणु बन्दछ । प्रति कणहरूको खोजीबाट एण्टी प्रोटोन, एण्टी न्यूट्रोन्स, एण्टी मेमान्सहरूको संयुक्त मिलनबाट एण्टी न्यूक्लियसको कल्पना गरियो । यस कल्पनालाई साकाररूप सन् १९६५ मा कोलम्बिया विश्वविद्यालयको भौतिक शास्त्रका डा. लियोन लेडरमेनले दिए । उनले एण्टी न्यूक्लियसको संरचना गरेर एण्टी एटमको स्वरूप प्रदान गरे। पदार्थको साथमा प्रति पदार्थको अस्तित्वलाई अब वैज्ञानिक जगतमा निर्विवादरूपमा स्वीकार गरिन्छ ।

यस खोजबाट अब वैज्ञानिकहरूको सोच बदलिएको छ। उनीहरूको भनाइ छ कि न केवल पदार्थ परन्तु प्रत्येक संरचनाको एक स्वतन्त्र प्रतिरूप स्थूल सृष्टिमा विद्यमान हुनुपर्दछ। यस सिद्धान्तअनुसार प्रति जगत, प्रति मानव, प्रति जीव, प्रति वनस्पतिहरू पनि जगत, जीव एवं वनस्पतिको साथ संलग्न हुन्छ। प्रो. डिराकका अनुसार सृष्टिमा विद्यमान सबै कणहरूको साथ अदृश्यरूपमा उनको प्रतिकण मौजुद हुन्छ । वास्तवमा ऊर्जाले रूपान्तरित भएर प्रति पदार्थ एवं पदार्थको जन्म दिन्छ । यहाँ प्रश्न उठ्न सक्दछ कि पदार्थ त देखिन्छ तर प्रतिपदार्थ किन देखिँदैन ? तथ्य तथा प्रयोगहरूबाट यो कुरा थाहा हुन आएको छ कि पदार्थले प्रतिपदार्थलाई विकर्षण गर्दछ। यस विकर्षणको फलस्वरूप सबै प्रतिपदार्थहरू कुनै अदृश्य लोकमा पुग्दछन् जसलाई प्रति विश्वको नामले गायन गरिएको छ । तथ्य आखिर जे भए पनि पदार्थ, विश्व, मनुष्य तथा अन्यान्य प्रकृतिको संरचनाको साथ उनको प्रति स्वरूप पनि यहाँ विद्यमान छ ।

परस्पर विरोधी प्रकृतिको कारण पदार्थ र प्रतिपदार्थहरूको मिलन भयो भने भयंकर विस्फोटको सम्भावना गरिएको छ। केही वर्षपूर्व रुसको साइबेरिया क्षेत्रमा भयंकर विस्फोट भएको थियो । रसायनशास्त्रका प्रसिद्ध वैज्ञानिक एवं नोवेल पुरस्कार विजेता डा. विलिमर्ट एफ. लिर्ब्बाको भनाइ थियो उक्त विस्फोटन पदार्थको टकराहटबाट नै भएको हो । जो हिरोशिमामा छोडिएको बमभन्दा १,५०० गुणा शक्तिशाली थियो । त्यसैले दुवैको विकर्षणबाट नै सन्तुलन कायम हुन सक्दछ। यदि कुनै कारणले दुवै मिल्दछन् भने विस्फोट हुन सक्दछ ।

अध्यात्मविज्ञानद्वारा अदृश्य जगत एवं अदृश्य सत्ताका साथ सम्बन्ध बनाउने सम्बन्धमा यही कुरा आउँछ। यसमा दैवी सृजन र दानवी विध्वंसका दुवै सत्ताहरू विद्यमान हुन्छन्। अदृश्यमाथि, सूक्ष्ममाथि, अविश्वास गर्ने दिन अब गइसकेको छ । प्रति पदार्थ एक प्रति विश्वको अस्तित्वले भौतिक वैज्ञानिकहरूलाई सूक्ष्मसत्ताको पदार्थसम्म मात्र होइन, चेतनासम्म पुग्नको लागि पनि बाध्य गराइरहेको छ । यो आध्यात्मिक आत्मीकको भौतिकीमाथिको विजय यात्राको श्रीगणेश मात्र हो ।

जय गुरुदेव !

# शैवधर्म

श्वेताश्वेतोपनिषदकालमा रुद्र शिवको उपासनासम्बन्धी धारणा अझ विकसित हुन पुग्यो । यस उपनिषद्ले रुद्रको ईश्वररूप उनको जीव र प्रकृति तत्त्वसँग गाँस्यो । प्रथमपटक रुद्र शिव सम्प्रदाय र तत्सम्बन्धी दर्शन यस उपनिषद्मा राखिएको पाइन्छ । यस उपनिषद्मा मायालाई शिवको शक्तिको रूपमा प्रस्तुत गरिएको छ । जसमा 'जब न दिन थियो न रात, न सत थियो त असत, त्यसताका केवल म थिएँ' भन्ने उल्लेख गरिएको छ । यस उपनिषद्मा शिवलाई एकमात्र अक्षर तत्त्वको रूपमा मान्दै शिव प्रकाश हो र उनैबाट ज्ञानको प्रसार भएको हो भनिएको पाइन्छ । आर.जी. भण्डारकरका अनुसार 'यस उपनिषद्मा सतरुद्रको प्रार्थनाका लागि दुइटा मन्त्रहरू पनि वर्णित छन् । यी मन्त्रहरूअनुसार रुद्र स्वयं समस्त प्राणी या भूतहरूमा अवस्थित छन् । यस्ता रुद्रले परमशान्त मूर्त भएर हामीतिर हेरुन् ।' यस उपनिषद्मा ठाउँ-ठाउँमा शिवलाई परब्रह्म भनिनुका साथै विश्वस्रष्टा अनेकौं रूपवाला जसको जानकारी पाउँदा मात्र मृत्युका बन्धनहरूबाट मुक्त हुन सकिन्छ भनिएको छ । यस उपनिषद्मा मोक्षको मार्ग नै शिवको ध्यान बताइएको छ र ध्यानलाई फलदायी तुल्याउन अनेकौं योगक्रियाहरूको व्याख्या गरिएको छ । यस उपनिषद्ले भागवतगीताभन्दा धेरै अघि नै भक्तिमार्गको बाटो खुला पारेको र भक्तिको केन्द्रको रूपमा शिवलाई स्थापित गरेको कुरा भण्डारकरले उल्लेख गरेका छन् ।

केन उपनिषद् लेखिएताका 'उमा' शब्दको उल्लेख पाइन्छ । जसलाई हेमवती वा हिमवानकी पुत्री भनिएको छ । यिनै उमा पछि गएर रुद्र शिवकी पत्नीको रूपमा देखा पर्दछिन् । यस उपनिषद्मा इन्द्र, अग्नि र वायुको आफ्नो शक्तिसम्बन्धी घमण्डलाई शिव रुद्रले चूर्ण पारेको कथा उल्लिखित छ । यसप्रकार उक्त कथाले शिवको सर्वोच्चतालाई उमा हेमवतीको मुखबाट स्थापित गर्ने कार्य गरेको छ ।

अथर्वशिरस नामक उपनिषद्ले पनि शिवको महानताको गुण गाउँछ । यस उपनिषद्मा शिवले 'म एक्लै थिएँ, एक्लै छु र एक्लै हुनेछु, म सबै ठाउँमा र बस्तीमा उपस्थित छु' आदि वाक्य बोलेको प्रसंग परेको छ । यस उपनिषद्ले शरीरमा भष्मलेप गर्ने कुरा र भष्मसम्बन्धी धारणालाई अर्थ्याउँदै भष्म अग्नि हो, भष्म जल हो, भष्म पृथ्वी हो, प्रत्येक वस्तु भष्म हो, मन, नेत्र र इन्द्रियहरू भष्म हुन् भनेको पाइन्छ । साथै पाशुपतव्रत र तत्सम्बन्धी विधानको बारेमा पनि उल्लेख गरेको पाइन्छ ।

उपनिषद्हरूको युगपछि रामायण र महाभारतजस्ता महाकाव्यकालमा पनि शैवधर्म झन विकसित भएको पाइन्छ । महाभारतमा पाशुपत अस्त्रका निम्ति अर्जुन हिमालय गएको र किरातरूपी शिवबाट परास्त भएपछि माटाको वेदी बनाएर शिवको आराधना गरेको तर वेदीमाथि उनले चढाएको फूल किरातरूपी शिवको टाउकोमाथि पुगेको हुनाले शिवलाई चिनेर शिवको शरण परेको कुरा उल्लेख छ ।

महाभारतमा वनपर्व र द्रोणपर्वमा रुद्र शिवको महिमा उल्लिखित छ । द्रोणपर्वमा अर्जुन र कृष्ण दुवै हिमालय पर्वतमा गएर रुद्र शिवको स्तुति 'अजन्मा', 'जगतसृष्टा', 'अविकारी' भनेर गरेको उल्लेख परेको छ । महाभारतको सौप्तिक पर्वमा अश्वत्थामाले शिव आराधना गरेर खड्ग प्राप्त गरी एकै रातमा पाण्डव शिविरमा सुतेका ५ पाण्डवपुत्रहरू र धृष्टद्युम्नलगायत पाण्डवका सेनाहरूलाई सखाप पारेको कथा छ । युधिष्ठिरले यस्तो कसरी हुन गयो भनेर श्रीकृष्णलाई प्रश्न गर्दा यो सम्पूर्ण घटना शंकरको शक्तिद्वारा भन्ने जवाफ श्रीकृष्णले दिएको पाइन्छ । यसबाहेक महाभारतको अनुशासन पर्वले लिङ्गोपासनाको पनि सन्दर्भ प्रस्तुत गरेको छ । महाभारतमा नै शिवको निवास हिमालयमा भएको, शिवपत्नी उमा पार्वती भएको जसका 'काली', 'कराली', 'दुर्गा'जस्ता अनेकौं रूप भएको उनीहरूको सेवाका निम्ति डरलाग्दा गणहरू र वाहनहरूको रूपमा वृषभ भएको वर्णन गरिएको छ ।

रामायण महाकाव्यमा पनि अनेकौं सन्दर्भहरूको वर्णन

गरेर शिवको सर्वोच्चतालाई पुष्टि गर्ने प्रयास गरिएको छ। उदाहरणका लागि रामद्वारा रामेश्वरमा लंका विजयको निम्ति शिवपूजा र रामेश्वर शिवको स्थापना, शिवद्वारा कामदेव भष्म भएको र शिव विवाहको कथा, भागिरथ ऋषिद्वारा शिवको सहयोगले गंगालाई पृथ्वीमा अवतरण गराएको कथा, गणेश र कार्तिकेय जन्मको कथा, हलाहल विषपान, दक्ष र सतीको कथा आदि अनेकौं प्रसंगहरू वर्णित छन्, जसले शिवको सर्वोच्चतालाई स्थापित गर्दछन् ।

पुराणयुगहरूमा रुद्र शिव र शैव सम्प्रदायहरूको वृहद् वर्णन पाइन्छ । साथै पुराणहरूले लिंगपूजाको पनि विषद् वर्णन दिएका छन् । खासगरी भागवत्पुराण, वामनपुराण, लिंगपुराण, शिवपुराण र वायुपुराण आदिमा शिव र शैव सम्प्रदायको व्यापक उल्लेख पाइन्छ । भागवत्पुराणमा शिवको परमशक्तिको वर्णन छ । लिंग र वायुपुराणमा शिव स्वयंले ब्रह्मालाई “विष्णु वासुदेव भएर जन्मेको समयमा आफू नकुलिन भएर सिद्धभूमिमा जन्मने र त्यसबेला ‘कौशिक’, ‘गर्ग’, ‘मित्रक’ र ‘रूष्ट’ नामक उनका ४ शिष्य हुने र त्यसबेला महेश्वर योगको प्रचार हुनेछ” भनेर बोलेको पाइन्छ । पुराणहरूमा त्रिपुरनाश, हलाहल विषपानलगायत शिवसम्बन्धी अनेकौं कथाहरू पाइन्छन् । यी कथाहरूले शिवको परमशक्तिलाई दर्शाउँछन् । साथै शिवलाई सृष्टिकर्ता परब्रह्म, प्रलयङ्कारी देवताहरूका पनि देवता भनेर वर्णन गर्नुका साथै शिवपरिवार र शिवगणहरूको समेत विषद् वर्णन गरेका छन् ।

ऐतिहासिक युगको थालनीपछि शिवसम्बन्धी ऐतिहासिक प्रमाणहरू यथेष्टरूपमा प्राप्त हुन्छन् । ई.पू. ३०० तिर चन्द्रगुप्त मौर्यको दरबारमा युनानी राजदूतका रूपमा पाटलीपुत्रमा बस्ने मेगास्थनिजले शिवलाई पहाडी क्षेत्रका प्रमुखरूपमा उपासना गरिने देवताको रूपमा उल्लेख गरेको पाइन्छ । यो नै शिवसम्बन्धी प्रथम ऐतिहासिक प्रमाण हो । यसैगरी ई.पू. दोस्रो शताब्दीतिरका पतञ्जलीले पनि आफ्नो महाभाष्यमा मौर्यहरूले शिव र स्कन्दका मूर्तिहरू बिक्री गरेको उल्लेख गर्नुका साथै ‘शैव भागवतहरू’को पनि विवरण दिएका छन् । यस प्रमाणले ई.पू. दोस्रो शताब्दीतिर शैव भागवत सम्प्रदायको विकास भइसकेको देखिन्छ । हरिभद्रको ‘षड्दर्शनसमुच्चय’अनुसार न्याय र वैशेषिक दर्शनका जन्मदाता गौतम र कणाद ऋषिहरू शैवमार्गी थिए । यसैगरी कल्हणको ‘राजतरंगिणी’अनुसार अशोकका उत्तराधिकारीहरूमध्ये ‘जलाउक’ शैवमार्गी थिए । ईसाको प्रथम शताब्दीमा कुषाणहरू शिवभक्त देखिन्छन् जसले आफ्ना सिक्काहरूमा साँढे र त्रिशुलका चिह्न अंकित गराएका थिए ।

गुप्त राजाहरूको शासनकालमा शैवधर्मको उन्नति र उत्कर्ष तीव्रगतिले भएको पाइन्छ । चन्द्रगुप्त द्वितीयका मन्त्री वीरसेन शैव थिए गुप्त राजाहरूको शासनकालमा अनेकौं शिवमूर्ति, शिवलिंग र शिवालयहरू स्थापना भएको पाइन्छ । भारतवर्षमा पाइने शिवमूर्तिहरूमध्ये अत्यन्त सुन्दर मूर्तिहरू गुप्तकालीन नै हुन् । एकमुखी र पञ्चमुखी शिवलिंगहरू गुप्तकालका कलाकारहरूकै देन हुन् । यस युगमा कालिदासजस्ता कविले कुमारसम्भवजस्तो महाकाव्यको रचना गरेर शैवधर्मको प्रतिष्ठामा महत्त्वपूर्ण योगदान पुऱ्याए । स्कन्द गुप्तले त शैवधर्मप्रति आस्था व्यक्त गर्दै साँढेका आकृतियुक्त सिक्काहरू चलाए । गुप्तकालमा विरशैव, प्रत्यभिज्ञा र पाशुपतजस्ता शैव सम्प्रदायहरू प्रचलित थिए । तर सबैभन्दा धेरै प्रचलित सम्प्रदायचाहीँ पाशुपत नै थियो ।

यस युगमा ‘अर्धनारीश्वर’ शिवको पनि कल्पना गरियो र शिवपार्वतीका संयुक्त मूर्तिहरू निर्माण गरिए । ब्रह्मा, विष्णु र शिवलाई ‘त्रिमूर्ति’अन्तर्गत पूजा, उपासना गर्ने कार्य पनि गुप्त युगकै देन हो । तीनवटै देवतालाई एकै मूर्तिमा अभिव्यक्त गरेर यसैताकाका कलाकारहरूले अनेकौं मूर्तिहरू निर्माण गरेको पाइन्छ । यस्ता मूर्तिहरूमध्ये एलिफान्टाको

त्रिमूर्ति अत्यन्त प्रख्यात छ । यसका साथै शिव र विष्णुलाई एउटै मूर्तिमा 'हरिहर'को रूपमा स्थापित गर्ने युग पनि गुप्त युग नै थियो । गुप्त युगका शिवसम्बन्धी सबै परम्परा पछिसम्म कायम रहेको पाइन्छ । यसप्रकार ई. को तेस्रो शताब्दीदेखि छैटौँ शताब्दीमा शैवधर्म अत्यधिक उत्कर्षमा पुगेको देखिन्छ । यसैताका शैवधर्ममा अनेकौँ सम्प्रदायहरूको उत्पत्ति र विकास भयो । यसकालका अनेकौँ अभिलेखहरूमा शिवका अनेकौँ नाम प्रशस्ति र स्तुतिहरू पाइन्छन् । वर्धन, कल्चुरी, परमार, सेन, प्रतिहार, चन्देल, चेली, गहदवाल आदि अनेकौँ राजवंशहरूको शासनकालमा पनि शैवधर्मको विकास निरन्तर भइनैरह्यो । इस्वीको सातौँ शताब्दीतिर भारत यात्रा गर्ने ह्वेनसाङले आफ्नो यात्रा विवरण लेखमा १२ पटक पाशुपत र पाशुपत सम्प्रदायीहरूको उल्लेख गरेका छन् । साथै वनारस शैवधर्मको प्रधान केन्द्र भएको, त्यहाँ शिवका १ सय मन्दिरहरू रहेका, साथै १० हजार पाशुपत मतावलम्बीहरू उनले भेटेको उल्लेख गरेका छन् ।

जय गुरुदेव !

# शिष्य धर्म

***शिष्य र गुरूको सम्बन्ध जीवनमा सबैभन्दा श्रेष्ठतम् सम्बन्ध मानिएको छ। यस सम्बन्धलाई संसारको कुनै पनि तराजुमा तौलन सकिन्न। एक श्रेष्ठ शिष्यमा अवश्य निम्न गुण हुनुपर्दछ जुन गुणहरूबाट व्यक्तिमा विश्वास र निष्ठा बढ्छ–***

– 'हरी रुठे गुरु ठौर है गुरु रुठे नही ठौर' यस कुरालाई ध्यानमा राखेर शिष्यले गुरुलाई सुखी एवं प्रसन्न राख्ने प्रयत्न हुनुपर्दछ।

– जे गुरुले भन्नुभएको छ शिष्यले त्यसलाई गरोस् तर जे गुरुले भन्नुहुन्छ त्यतातिर ध्यान नदेओस्। गुरुले कुन क्षणमा के गर्नुहुन्छ भन्ने शिष्यले बुझन सकेको बेला शिष्य स्वयं गुरु बन्न जान्छ।

– गुरु नै शिष्यका लागि मातापिता, बन्धुसखा हुनुहुन्छ। अतः उसले आफ्ना समस्त चेतना गुरुचरणमा नै लगाइराख्नु पर्दछ।

– शिष्य त्यो हो जसले उठ्दा, बस्दा, सुत्दा, जाग्दा नित्य गुरुमन्त्रको जप गर्दछ।

– शिष्य गुरु सुत्नु भएपछि मात्रै सुत्नुपर्दछ र गुरु उठ्नुभन्दा पहिल्यै उठ्नुपर्दछ।

– गुरुले चाहे जतिसुकै कठिन एवं असम्भव कार्य किन नसुम्पिएको होऊन्, शिष्यको कर्तव्य भनेको नअनकनाइकन त्यसलाई गर्नु हो।

– गुरुले शिष्यका बाधाहरुलाई आफूमाथि लिनुहुन्छ। अतः शिष्यको पनि धर्म हो कि ऊ गुरुको चिन्ता र तनावहरुलाई हटाउनका लागि प्राणपणले जुटिरहोस्।

– शिष्यको एउटै मात्र लक्ष्य हुन्छ यो हो कि उसले स्थायीरुपमा आफ्नो हृदयमा गुरुलाई स्थापित गरोस्।

– यस्तो सौभाग्यशाली शिष्य पछि गएर गुरुको हृदयमा स्थायीरुपले स्थापित हुन पाउँछ।

– ओंठबाट गुरु शब्द उच्चारण भएको बेला गला अवरुद्ध हुन्छ र आँखा रसाउन थाल्छ भने बुझनुपर्दछ कि शिष्यत्वको पहिलो पाइला उठेको छ।

–जब चौबीसैघण्टा गुरुको महसुस हुन्छ, खाँदा, उठ्दा, बस्दा, हाँस्दा, गाउँदा र अन्य क्रियाकलाप गर्दा 'गुरु हुनुहुन्छ म होइन' भन्ने लाग्दछ भने बुझनुपर्छ कि शिष्य कहलिन लायक हुनुभएको छ।

**गोरक्ष निखिल वाणी पत्रिकाको विस्तार योजनामा भाग लिऔं**
**गुरुकृपा आशीर्वाद प्राप्त गरौं**

# विशेष योजना – विशेष पुरस्कार *

**२१ जना सदस्य बनाउनेलाई**
**प्राणप्रतिष्ठित पारद गणपति**

**जय गुरुदेव !**

**५१ जना सदस्य बनाउनेलाई**
**सावर साधना एवं विशेष शक्तिपात दीक्षा**

सम्पर्क:
**सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौं
फोन: २१००१५३
९८४१३८७०३३

**१०१ जना सदस्य बनाउनेलाई– सावर साधना, विशेष शक्तिपात दीक्षा एवं प्राणप्रतिष्ठित पारद श्रीयंत्र**

*** यो योजना २०६८ जेठ १० गतेसम्म मात्र लागु हुनेछ ।**

# अक्षय तृतीया

जीवनको यथार्थ सत्य भनेको क्षय हो । जे जति कुरा निर्माण भएका छन्, चाहे त्यो मानिसको शरीर होस् अथवा अन्य कुनै पदार्थ कालको गतिबाट प्रभावित भएर क्षय हुन्छ । अर्थात् जहाँ निर्माण छ, त्यहाँ विनाश पनि अवश्यै हुन्छ । तर यो पनि सत्य हो कि जहाँ विनाश अर्थात् विध्वंश छ, त्यहाँ निर्माण पनि छ । मानिसहरूको विचारधारा प्राय:जसो नकारात्मक नै हुन्छ । त्यसैले उसले निर्माणबाट ध्वंसतिर यात्रा गर्‍यो । हाम्रो संस्कृतिमा जीवको निर्माणभन्दा जीवनको निर्माणमाथि अधिक ध्यान दिइएको छ । जीवको अन्त क्षय हुन सक्छ भनेर स्पष्टसित मानिएको भए पनि मनुष्यले निर्माणयुक्त जीवन जिउँछ भने त्यो उसको आत्मीक जीवन हुन्छ, त्यस जीवनको आत्मासित सम्बन्ध हुन्छ । त्यसैले त्यस आत्मालाई अविनाशी भनिन्छ ।

**नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावकः ।**
**न चैनं क्लेदयन्त्यापो न शोषयति मारुतः ।।**

अर्थात् आत्मा अविनाशी तत्त्व हो जसलाई न त संसारको कुनै शस्त्रले समाप्त गर्न सक्छ, न त कुनै अग्निले नै जलाउन सक्छ, न कुनै जल अथवा वायुले नै नष्ट गर्न सक्छ । अक्षय रहने केवल आत्मा मात्रै हो ।

हाम्रो शरीर पनि लाखौँ कोशिकाहरूले बनेको हुन्छ । यो निरन्तर क्षय हुँदै रहन्छ र साथै निर्माण पनि हुँदै रहन्छ । जीवनमा वातावरणमा व्याप्त अक्सिजनलाई ग्रहण गरी रगतलाई शुद्ध गरेर कार्बनडाइ अक्साइड बाहिर निकाल्ने कार्य निरन्तर चलिरहन्छ । यस क्रियामा सबैभन्दा अधिक योगदान फोक्सो तथा हृदयको हुन्छ । यी दुई निरन्तर क्रियाशील रहन्छन् ।

जब यिनीहरूमाथि धेरै प्रभाव पर्छ तब रोग उत्पन्न हुन्छ जसलाई क्षयरोग तथा टी.बी. भनिन्छ । क्षय अर्थात् निरन्तर टुट्ने क्रिया प्रारम्भ भएपछि जीवन अक्षय रहन पाउँदैन ।

जीवनमा क्षय हुन सक्छ । तर के यस्तो स्थिति पनि आउन सक्छ कि जति क्षय भएको छ त्यसभन्दा अधिक पुन: निर्माण हुन जाओस् र जीवन निरन्तर उच्चतातिर गतिशील रहोस् । यसैलाई नै अक्षय स्थिति भनिन्छ । क्रिया हुन्छ भने क्षयको मात्राभन्दा अधिक निर्माणको मात्रा हुन्छ । त्यसैले श्रेष्ठ

*अर्थात् आत्मा अविनाशी तत्त्व हो जसलाई न त संसारको कुनै शस्त्रले समाप्त गर्न सक्छ, न त कुनै अग्निले नै जलाउन सक्छ, न कुनै जल अथवा वायुले नै नष्ट गर्न सक्छ । अक्षय रहने केवल आत्मा मात्रै हो ।*

पुरुषहरूले उत्तरोत्तर प्रगति गर्दै रहन्छ र जीवनमा उच्चतम् शिखरमा पुग्दछ । त्यसपछि उनीहरूको जीवन अनुकरणीय बन्न जान्छ, अन्यका लागि प्रेरणास्पद बन्न जान्छ ।

अक्षय तृतीया यस्तै महान् दिवस हो । यसलाई सिद्धमुहूर्त भनिएको छ । सबैभन्दा ठूलो कुरा त यो हो कि अक्षय तृतीयाका दिन जति धेरै संख्यामा विवाह हुन्छ त्यति अन्य दिवसमा हुँदैन । जति घरहरू बनाउने कार्य हुन्छ त्यति अन्य दिवसमा प्रारम्भ हुँदैन । यस दिवसको सम्बन्धमा हजारौँ वर्षदेखि यस्तो मान्यता रहेको पाइन्छ कि यसदिन गरिएको प्रत्येक कार्य शुभ नै हुन्छ । यसदिन कुनै ग्रह संयोग हेर्ने आवश्यकता हुँदैन । चाहे कुनै पनि ग्रह कुनै पनि राशिमा स्थित भए पनि अक्षय तृतीयाको मुहूर्त सिद्ध उच्च मुहूर्त हो ।

यो सौभाग्य दिवस हो । यसकारण स्त्रीहरू यसदिन विशेष व्रतादि बस्छन् अर्थात् पूर्वजहरूको आशीर्वाद एवं पुण्यात्माहरूसित परिवार वृद्धिको कामना गर्छन् । अक्षय तृतीया लक्ष्मीसिद्धि दिवस पनि हो । यसकारण लक्ष्मीसित सम्बन्धित साधनाहरू विशेषरूपले गरिन्छ । यसदिन कुनै पनि प्रकारको साधना प्रारम्भ गरिन्छ भने नयाँ कार्यको प्रारम्भ पनि गरिन्छ । यक्षिणी, अप्सरा र कमला साधनाका लागि पनि यो शुभमुहूर्त वा दिवस हो । उपयुक्त वर अथवा वधुको प्राप्तिका लागि र विवाहदोष निवारणका लागि पनि यो श्रेष्ठ पर्व हो ।

सद्गुरुदेवले आफ्नो एउटा प्रवचनमा भन्नुभएको छ कि होली, दीपावली, शिवरात्रि, नवरात्रिजत्तिकै सिद्धतम् दिवस अक्षय तृतीया हो । यसदिन मान्त्रोक्त अथवा तान्त्रोक्त जुनसुकै साधना सम्पन्न गरिए पनि पूर्णता प्राप्त हुन्छ नै । जीवनको क्षय रोकिएर सुख, सौभाग्य, कीर्ति, यश आनन्द, अक्षय बन्न जान्छ । जय गुरुदेव !

## दीर्घायु र आरोग्यताको कामनासँगै

# माताजीको शुभजन्मोत्सव

*'ह्याप्पी बर्थ डे माता, ह्याप्पी बर्थ डे,*

*ह्याप्पी, ह्याप्पी, ह्याप्पी, ह्याप्पी, ह्याप्पी बर्थ डे ।'*

पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको शुभजन्मोत्सव मनाउने क्रममा यस्तै लय र तालमा भजन घन्किएको थियो । गत चैत्र २५ गते तदनुसार अप्रिल ८ तारीख सिद्धाश्रम शक्ति केन्द्र, बसुन्धरामा आयोजित माताजीको ७८ औं शुभजन्मोत्सव कार्यक्रमलाई 'विशेष भजनकीर्तन कार्यक्रम'को रूपमा मनाइएको थियो ।

बेलुकी ४:०० बजे निखिलेश्वरानन्द स्तुति र गोरक्षस्तवनबाट शुभारम्भ भएको उक्त कार्यक्रममा 'सबै मिली गाऊँ आज माताकै नाम, गोरखकालीमाता तिमीलाई लाख लाख प्रणाम', 'जगदम्बेश्वरी.. ', दिखलाके झलक...' जस्ता भजन प्रस्तुत भएको थियो भने प्रस्तुत प्रत्येक भजनमा सहभागी साधकसाधिकाहरू दिल खोलेर नाचेका थिए । भजनमा तालमा ताल मिलाउँदै नाच्नेहरूलाई देखेर कहिल्यै ननाच्नेहरूले पनि जिउ तन्काएका थिए भने कोही कोही त संकोच इत्यादिलाई पन्छाएर नाच्नेहरूसँगै होस्तेमा हैस्ते गर्दै थिए । कसैले थपडी बजाएरै भए पनि साथ निभाएका थिए ।

कार्यक्रममा सावरपन्थी साधक रामजी अर्यालले परब्रह्मस्वरूप परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको सहयात्रीको शुभजन्मोन्सव मनाउन पाउनु सिद्धाश्रम शक्ति केन्द्रको सौभाग्य भएको बताउनु भयो । उहाँले सावर साधनाको बारेमा जानकारी दिनुहुँदै आठौं रोट महोत्सवमा पूजनीय माताजी र पूज्य गुरुदेव अरविन्दज्यूको आगमन हुने निश्चित प्राय: भएको बताउनुभयो । रोट महोत्सवमा सावर शक्तिपात दीक्षा र विशेष शक्तिपात दीक्षाहरू पनि प्रदान गरिने जानकारी उहाँले दिनुभएको थियो ।

उहाँले यस शुभजन्मोत्सवदेखि नै हामी पनि सदा खुसी हुन सकौं र हामीलाई परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, आशीर्वाद प्राप्त होस्, हामीले नयाँ जीवनमा पदार्पण गर्न सकौं भन्ने शुभेच्छा पनि प्रकट गर्नुभयो ।

उक्त कार्यक्रममा माताजीले शुभजन्मोत्सवको पावन अवसरमा दिनुभएको आशीर्वचनको रेकर्डलाई सुनाइएको थियो । उक्त आशीर्वचनलाई अधिराज्यभरिका सम्पर्क कार्यालयहरूमा एकैपटक प्रसारण गरी सुनाइएको थियो । पूजनीय माताजीको जन्मोत्सवलाई प्रत्येक सम्पर्क कार्यालयहरूमा पनि भव्यरूपमा मनाइएको थियो ।

शुभजन्मोत्सव कार्यक्रममा माताजीको निर्देशनबमोजिम केक काटिएको थियो र उक्त महाप्रसाद भक्तजनहरूलाई वितरण गरिएको थियो । कार्यक्रममा होली महोत्सवमा गुरुधाम जोधपुरबाट ल्याइएको टीकाफूल पनि वितरण गरिएको थियो । कार्यक्रममा साँझ दीपावली पनि गरिएको थियो ।

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) यस धर्तीमा अवतरित हुनुभएको अंग्रेजी महिनाको २१ तारीखको पावन अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले यस तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आइरहेको छ । यसै क्रममा गत चैत्र ७ गते तदनुसार २१ मार्च, २०११ का दिन बसुन्धरा आश्रममा उक्त कार्यक्रम सम्पन्न भयो ।

बिहान १०:१५ मा शुभारम्भ भएको कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवनको सामुहिक सस्वर पाठ, गुरू पादुका पूजन, गुरुमन्त्र जप, हवन, आवाहन भजन, आरतीका क्रमहरू सम्पन्न भएका थिए ।

आरतीपछि भजनकीर्तन, नृत्य, प्रवचन आदिका क्रमहरूरहेको महोत्सवमा जयन्ती पुडासैनी र रमिला तण्डुकार गुरु पादुका पूजन गर्ने सौभाग्य पाउनुभएको थियो ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सम्पन्न हुँदै आइरहेका मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरू गत महिना निम्नानुसार सम्पन्न भए–

चैत्र ७ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००-९:०० बजे । चैत्र १ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००-८:०० बजे । चैत्र २ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००-९:०० बजे । चैत्र ३ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, बिहान ८:००-९:०० बजे । त्यस्तै मासिक हवन कै क्रममा चैत्र २ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००-९:०० बजे, चैत्र ३ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००-९:०० बजे, फाल्गुण ३ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००-८:०० बजे, चैत्र १ मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००-८:०० बजे सम्पन्न भयो ।

## आध्यात्मिक नेतृत्वकर्ताहरूका लागि प्रशिक्षण

**अब सौंप दिया इस जीवनको**
**सब भार तुम्हारे हाथों में ।**

सम्पूर्ण तालिम तथा प्रशिक्षण कार्यक्रमलाई नै गुरु चरणमा अर्पण गर्दै तालिममा सहभागीहरूको स्वागतका लागि गुरु समर्पण स्तुति गाइएको थियो गत चैत्र २१ गतेको आध्यात्मिक नेतृत्वकर्ता तह (Spiritual Leading Team) को तालिम तथा प्रशिक्षण कार्यक्रममा ।

सिद्धाश्रम शक्ति केन्द्रद्वारा संचालित काठमाडौं बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा सम्पन्न उक्त तालिम कार्यक्रम परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको स्तुतिवन्दना, प्रार्थनाबाट शुरु भएको थियो । त्यसपछि भएको गुरु पादुका पूजनमा साधकद्वय उद्धव सुवेदीर शिव लामिछानेले पूजन गर्ने सौभाग्य पाउनुभएको थियो ।

उपासनाको प्रयोगात्मक अभ्यास, आध्यात्मिक नेतृत्वकर्ता तथा वर्तमान परिस्थिति, आन्तरिक शुद्धिकरणका लागि नादको भूमिकाजस्ता विषयमा सहभागीहरूले प्रशिक्षण पाउनुभएको उक्त तालिम कार्यक्रममा पूजनीय गुरुमाताले गाउनुभएको रेकर्डेड भजनमा सबैले नृत्य गरेका थिए ।

उक्त तालिम कार्यक्रममा स्वागत मन्तव्य गुरुसेवा दलकी सदस्य साधिका ज्ञानुरेग्मीले दिनुभएको थियो । स्वागतमन्तव्य दिनुहुँदै उहाँले विश्वास भएको ठाउँमा गुरुदेव बस्नुहुने बताउनुभएको थियो ।

कार्यक्रममा सावरपन्थी साधकरामजी अर्यालले साधनाका बारेमा बताउनुभएको थियो । उहाँले आठौंरोट महोत्सवमा आयोजना हुने सावर साधनाका बारेमा पनि प्रकाश पार्नुभएको थियो ।

कार्यक्रममा सावरमातृका साधिका विन्देश्वरी वरालले विभिन्न विषयमा प्रशिक्षार्थी कार्यकर्ता साधकसाधिकाहरूलाई बताउनुभएको थियो ।

कार्यक्रमको क्रममा संस्थाले ठूलठूला कार्यक्रमहरू

## बीरगञ्जमा कार्यक्रम

पर्साको बीरगंजको मनवा बजारमा अवस्थित आश्रममा गत चैत्र १९ गते भजनकीर्तन तथा परिचयात्मक कार्यक्रम सम्पन्न भएको छ । स्थानीय बुद्धिजीवीहरूको पनि सहभागितारहेको उक्त कार्यक्रममा स्थानीय भजन खलकले पनि भजन गाउनुभएको थियो ।

बिहान १०:०० बजे शुभारम्भ भएको कार्यक्रममा हवन पनि सम्पन्न भएको थियो भने उक्त कार्यक्रममा सावरपन्थी साधकरामजी अर्याल र सावरमातृका विन्देश्वरी बरालले गुरु र साधनाबारेमा बोल्नुभएको थियो । कार्यक्रममा स्वागत मन्तव्य डोलराज गौतमले दिनुभएको थियो भने धन्यवाद ज्ञापन ज्ञानबहादुर वास्तोलाले व्यक्त गर्नुभएको थियो । कार्यक्रममा केन्द्रबाट पनि साधकसाधिकाहरूको सहभागितारहेको थियो ।

## बबरमहलको चौथो वार्षिकोत्सव

सम्पर्क कार्यालय बबरमहलले गत चैत्र २४ गते चौथो वार्षिकोत्सव मनाएको छ । स्तुति वन्दनाबाट शुरु भएको उक्त वार्षिकोत्सव भजनकीर्तनका साथ सम्पन्न भएको थियो । कार्यक्रममा एक घण्टा मन्त्रजप पनि गरिएको थियो । उक्त कार्यक्रममा स्थानीय स्तरबाट सहभागीहरूको बाक्लो उपस्थिति रहेको थियो भने गुरुसेवा दलका सदस्यहरूको पनि उपस्थिति रहेको थियो ।

---

सम्पन्न गर्न पाउनु यसको पात्रताको प्रमाण होर गुरुदेवहरूको योजनानुरूप सबैले आफूलाई ढाल्नुपर्ने विषयका प्रसंगहरूले सबैलाई छोएको थियो । हिजोका कुराबाट शिक्षा लिई अगाडि बढ्नुपर्ने कुरामा पनि उक्त कार्यक्रमका अधिकांश वक्ताहरूको जोडरहेको थियो ।

तालिमको अन्तमा आश्रमको संरचनालाई वृहत् बनाउनका लागि विगतमा जस्तै ग्रेडिंग नगरी कार्यकर्ताहरूको क्रम निर्धारण गरिएको थियो । क्रम निर्धारणमा परेका कार्यकर्ताहरूलाई बधाइ ज्ञापन गर्दै कार्यक्रमको समाप्ति भएको उक्त तालिममा गुरुसेवा दलका साधक देवेन्द्र विक्रमले कार्यक्रम संचालन गर्नुभएको थियो ।

काठमाडौँ, भक्तपुर, ललितपुरलगायत अधिराज्यका अन्य जिल्लाहरूबाट पनि प्रशिक्षार्थीहरू सहभागी हुनुभएको उक्त तालिम कार्यक्रम बिहान १० बजे शुभारम्भ भएको थियो ।

## हेटौंडा आश्रमको अवलोकन भ्रमण

गत चैत्र १९ गते केन्द्रबाट प्रतिनिधित्व गरी जानुभएका कार्यकर्ताहरूको एक समूहले हेटौडामा रहेको आश्रमको अवलोकन गर्नुभएको थियो । अवलोकन भ्रमणका अवधिमा आश्रमको प्रगतिका बारेमा जानकारी हासिल गरिएको थियो । उक्त आरती केन्द्रमा हप्तामा दुई दिन आरती हुँदै आइरहेको छ ।

समयको गतिसँगै नयाँ सालको आगमनको समय नजिकिएको छ। नयाँ साल २०६८ को आगमनसँगै २०६७ साल विदा हुने तरखरमा छ। यो संक्रमणसँगै प्रकृतिमा पुन: एकपल्ट सबैतिर सौन्दर्य फैलिएको छ, वासन्ती हावाको मृदु स्पर्शले वातावरण पुन: तरंगित छ।

सिद्धाश्रम शक्ति केन्द्र नेपालको लागि नववर्ष सदा नै विशेष उल्लास बोकेर आउने गर्दछ। सम्पूर्ण शिष्यशिष्याहरुको सबैभन्दा महत्वपूर्ण र खुशीको समय बन्ने गरेको अवतरण दिवस नववर्षको शुभारम्भमा नै पर्दछ। परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीको अवतरणले नै आज मानवसमुदायले श्री श्री महायोगी गुरु गोरखनाथ र परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजजस्ता दिव्यतम् विभूतिहरुलाई सद्‌गुरुको रुपमा प्राप्त गरेको छ। तसर्थ अप्रिल २१ तारीखप्रति अर्थात् अवतरण दिवसप्रति मानवसमुदाय जति नै कृतज्ञ भए पनि कम नै छ। यसर्थ हाल सिद्धाश्रम शक्ति केन्द्र नेपाल अवतरण दिवसलाई यथाशक्य भव्य र भावमयरुपमा मनाउने तयारीमा जुटिरहेको छ।

अवतरण दिवसको रुपमा सन्निकट रहेको खुशीयालीमा रम्दै २०६७ साललाई फर्केर हेर्दा यो वर्ष सिद्धाश्रम शक्ति केन्द्र नेपालको इतिहासमा नै महत्त्वपूर्ण वर्ष रहेको छ। यस वर्षमा संस्थाले धेरै नै उतारचढाव र विषम परिस्थितिहरुको सामना गर्नुपऱ्यो। आश्रम बिगार्न, भत्काउन धेरै तप्काहरु सक्रिय रहे। आश्रमसँग आवद्ध मानिसहरुलाई भेटेर, फोन गरेर आश्रम नजाने बनाउनलाई कुनै प्रयत्न बाँकी राखेन। आश्रम अब १ महिनामा, तीन महिनामा, ६ महिनामा बन्द हुँदैछ भनी भविष्यवाणी गर्ने व्यक्तिहरुले व्यक्तिलाई सम्पूर्ण ठानी सद्‌गुरुदेवहरुको अस्तित्वलाई नै बिर्सनुभयो।

सम्पूर्ण प्रतिकूलताहरुमा सत्यलाई नै आधार मानी आश्रम अघि बढ्दै गयो। हजारौंहजार गुरुसेवक गुरुसेविकाहरुको बलियो साथ आश्रमलाई प्राप्त हुँदै गयो। २०६७ सालको करिब अन्ततिर अर्थात् गत माघ २२ र २३ गते सिद्धाश्रम शक्ति केन्द्रले सम्पन्न गरेको पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको राष्ट्रिय अभिनन्दन तथा अन्तर्राष्ट्रिय साधना शिविर कार्यक्रमको ऐतिहासिक सफलताले अनायासै संस्थालाई धेरै धेरै उचाइमा पुऱ्याइदियो। कार्यक्रमको अद्वितीय सफलता, पूजनीय गुरुमाता स्वयंको आश्रम र कार्यक्रमसम्बन्धी अभिव्यक्ति, जगत्जननी माता र अरविन्द गुरुदेवको आश्रम र विद्याश्रम आगमन, कार्यक्रममा गुरुसेवी र साधकसाधिकाहरुले प्राप्त गरेको दिव्यानुभूति र भारतमा हाल भइरहेका सिद्धाश्रम शक्ति केन्द्रको प्रशंसाले सबैले एकातर्फ सत्यलाई बुझ्नुभयो भने अर्कोतर्फ सबैको आशा, भरोसा सिद्धाश्रम शक्ति केन्द्रमा केन्द्रीत भयो। यो कार्यक्रम सिद्धाश्रम शक्ति केन्द्रको इतिहासमा नै सबैभन्दा ठूलो र सबैभन्दा महत्त्वपूर्ण कार्यक्रम रह्यो।

सिद्धाश्रम शक्ति केन्द्रको जन्म नै सद्‌गुरुदेवहरुको चिन्तन विस्तार गर्नलाई भएको छ। परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीले आफूले देहगतरुपमा गर्नुपर्ने काम गरेर महाप्रयाण लिनुभयो र त्यसपछिको बाँकी काम सम्पन्न गर्नको लागि आफ्ना शिष्यरुपी अंशहरुलाई अगाडि बढाइरहनु भएको छ। शिष्यहरुको काँधमा सद्‌गुरुले प्रदान गर्नुभएको जिम्मेवारीलाई पूर्णता दिन नै आज हजारौंहजार शिष्यशिष्याहरु सिद्धाश्रम शक्ति केन्द्रमा गुरुकार्यमा सक्रिय हुनुहुन्छ।

नववर्ष २०६८ र ७६ औं अवतरण दिवसको यस पुनीत अवसरमा सिद्धाश्रम शक्ति केन्द्र नेपाल सद्‌गुरुहरुको चरणकमलमा यही याचना गर्दछ- 'सिद्धाश्रम शक्ति केन्द्र नेपाल सदासर्वदा शिष्य वर्गमा रहेर सद्‌गुरुदेवहरुको योजनामा अग्रसर हुन सकोस् र यसमा आवद्ध शिष्यशिष्याहरु व्यक्तिगत स्वार्थभन्दा, कुनै पनि प्रलोभनभन्दा माथि उठेर सही शिष्य बन्न सकौं र गुरुदेवहरुले दिनुभएको जिम्मेवारीमा विसर्जित भएर आफ्नो शिष्यधर्म निभाउन सकौं। अस्तु।

२१ मार्चका दिन वसुन्धरामा सम्पन्न दिव्य गुरु महोत्सव

२१ मार्चका दिन वसुन्धरामा सम्पन्न दिव्य गुरु महोत्सव

चैत्र २५ गते पूजनीय गुरुमाताको शुभजन्मोत्सव

चैत्र २५ गते पूजनीय गुरुमाताको शुभजन्मोत्सव

चैत्र महिनामा सम्पन्न श्री शिव गोरक्ष हवन

चैत्र महिनामा सम्पन्न तान्त्रोक्त वटुक भैरव हवन

चैत्र महिनामा सम्पन्न तान्त्रोक्त महालक्ष्मी हवन

चैत्र महिनामा सम्पन्न तान्त्रोक्त बगलामुखी हवन

गो.हु.का.द.नं. ६२/०६७/६८ का.जि.द.नं. ७०/०५६

# Gorakshya Nikhil Jyoti Divya Vidyashram

## A Complete English Medium School

- After a glorious six years of completion, now GNJDV is in its 7th year.

- A complete school with the blessing of Sadgurudevs for modern education in spiritual environment where students learn not only the bookish knowledge but also the moral norms and values.

- Montessori based primary classes.

- A school for your child's multi dimensional development through different ECA-CCA, indoor, outdoor programs plus spiritual stuffs.

- Frequent special counseling programs by child psychologists.

**Admission Open for PLAYGROUP TO VIII**

**Special Package for Boarders**

**HURRY UP ! Limited Seats Only**

Basundhara, Chakrapath, Kathmandu, Tel: 01-4355737, 4355789